# गोरक्ष निखिल वाणी

आध्यात्मिक शक्ति अनुसन्धानमूलक मासिक

कात्तिक २०६७

महालक्ष्मी विशेष

www.gnv.org.np

॥ ॐ नमो गुरु मछिन्द्र शब्द साँचा पिण्ड काचा मेर भक्ति गुरुका शक्ति नवनाथै जगाऊँ चौरासीनाथै जगाऊँ फुरो मंत्र ईश्वरो गुरु गोरख वाचा ॥

# आश्रम गतिविधि

१-१५: आश्विन महिनामा काठमाण्डौ उपत्यकामा सम्पन्न विभिन्न मासिक हवन कार्यक्रमहरु।

● वर्ष १२ ● अङ्क ३ ● कात्तिक २०६७ ● पूर्णाङ्क १३५

## सम्पर्क कार्यालयहरु


- **चितवन**, भ.न.पा- २, क्षेत्रपुर फोन: ०५६-५२१३८५
- **गोरखा**, सौरपानी–३ पोखरी, फोन: ९७४६०१८८७८, ९७४११२७७४५
- **कास्की**, पो.उ.म.न.पा.-१०, रामघाट, फोन: ०६१-५३०७८६
- **सर्लाही**, बरहथवा-७, एस्माली टोल, फोन: ०४६-५४००११
- **पाल्पा**, तानसेन, फोन: ९८४७०-२८१८८
- **ललितपुर**, लगनखेल, फोन:२२२००२१
- **गोरखा**, बसपार्क, फोन: ०६४-४२०३४८
- **तनहुँ**, दमौली, व्यास गुफा, फोन: ०६५-५६१६६२
- **लमजुङ**, बेँसीशहर, भीमसेनटोल
- **भक्तपुर**, कटुन्जे-१, फोन: ०१-६२१३४५५
- **काभ्रे**, बनेपा, न.पा. कार्यालय पछाडि फोन: ०१-६२२५१७२
- **कास्की**, लेखनाथ चोक, फोन: ०६१-२२९१९०
- **सिन्धुली**, रातमाटा फोन: ९८४४०४०८९९
- **स्याङ्जा**, स्याङ्जाबजार फोन: ९८४६०-४४३५४
- **चितवन**, गौरीगञ्ज
- **सिन्धुपाल्चोक**, बाह्रबिसे फोन: ०१-६९१६५९३
- **कास्की**, अर्चलबोट, विन्ध्यवासिनी
- **काठमाडौं**, पुरानोबानेश्वर, फोन: ०१-२१०११२६
- **काठमाडौं**, सिमलटार
- **काठमाडौं**, तीनकुने (मुनि भैरव)
- **ललितपुर**, गोदावरी


पत्रिका व्यवस्थापन समितिद्वारा सम्पादित एवं
***सिद्धाश्रम शक्ति केन्द्रद्वारा प्रकाशित***

## महालक्ष्मी विशेष

मूल्य रु. ३०/-, वार्षिक रु. ३५०/-

# जानकारी

सिद्धाश्रम शक्ति केन्द्र प्रचलित नेपाल कानूनअनुसार विधिवत् रूपमा दर्ता भएको एक अनुसन्धानमूलक आध्यात्मिक संस्था हो र यसको केन्द्रीय कार्यालय हाल बसुन्धरा, काठमाडौँमा रहेको छ। परमपूज्य सद्‌गुरुदेवद्वय परमहंस स्वामी श्री निखिलेश्वरानन्द महाराज एवं नेपालीहरूका गर्वका प्रतिमूर्ति महायोगी श्री शिव गोरक्षको अनुकम्पा, कृपा एवं आशीर्वादको फलस्वरूप यस केन्द्रको जन्म भएको हो। आफ्नो छुट्टै पहिचान, स्वतन्त्र अस्तित्व एवं आफ्नै किसिमको स्वाभिमान बोकेको यो संस्था देश विदेशमा रहेका अन्य कुनै संघ, संस्था वा आश्रमको शाखा, उपशाखा वा सम्पर्क कार्यालय नभएको व्यहोरा सम्बन्धित सबैका लागि जानकारी गराइएको छ। यो केन्द्र महान् गुरुहरूको स्पष्ट सूक्ष्म मार्गनिर्देशनमा आध्यात्मिक युग पुनर्निर्माणको लक्ष्यमा गतिशील छ। यहाँ संचालन भइरहेका सम्पूर्ण कार्यक्रम तथा गतिविधिहरू यसै केन्द्रमार्फत सोझै निर्देशित छन्। यहाँबाट उपलब्ध हुने सम्पूर्ण सामग्रीहरूको प्राण-प्रतिष्ठा विशेषरूपमा यही आश्रमबाट गरिएको हुन्छ। त्यसैले एक स्वतन्त्र र आफैमा सक्षम यस संस्थालाई अन्य कुनै संघ, संस्था वा आश्रमसँग तुलना गर्न खोज्नु, त्यस्तै प्रकारका कुराहरू यहाँबाट लागू गराउन, प्राप्त गर्न खोज्नु यस संस्थाको अवहेलना गरे सरह हुनेछ जे जति कार्यक्रमहरू यहाँ संचालन भइरहेका छन् र आगामी दिनहरूमा पनि संचालन हुँदै जानेछन्, ती सबै परमपूज्य सद्‌गुरुदेवहरूकै इच्छा एवं निर्देशनअनुसार सम्पन्न हुनेछन्। त्यसैले अनावश्यक तर्क-वितर्क, शङ्का-उपशङ्का गरी, भ्रम फैलाउँदै यस संस्थाको छविमाथि अनावश्यक टीका-टिप्पणी गर्नु सत्यता र वास्तविकतामाथि नै प्रश्नचिह्न लगाउनु हो। प्रत्येक व्यक्तिका लागि आवश्यक पर्ने सम्पूर्ण प्रकारका मार्गनिर्देशन प्रदान गरी भौतिक समस्याहरूको समाधान गर्दै आध्यात्मिक उच्चता प्रदान गर्न, पूर्णतामा लैजान यो केन्द्र सक्षम छ। विश्वास अविश्वासभन्दा माथि, साधारण व्यक्तिको सीमित सोचाइ, विचार र कल्पनाभन्दा परको यस अद्वितीय आश्रममा आबद्ध भई आफ्नो जीवनलाई उत्कर्षमा पुऱ्याउन सक्नु नै हाम्रो अहोभाग्य हुनेछ। यस्ता प्रकारका अनावश्यक भ्रमबाट सतर्क हुँदै पूर्णरूपमा स्पष्ट भएर मात्र अघि बढ्न हुन सम्पूर्ण महानुभावहरूमा सिद्धाश्रम शक्ति केन्द्र हार्दिक अनुरोध गर्दछ। साथै केन्द्रको आफ्नै प्रकारको नीति, नियम र अनुशासन भएकोले यसलाई पालना गर्न नसक्ने व्यक्तिहरूका लागि यस केन्द्रमा कुनै स्थान रहने छैन र यससम्बन्धी कुनै किसिमको सुनुवाइ पनि नहुने व्यहोरा अवगत गराइएको छ। साथै, आध्यात्मिक शक्ति अनुसन्धानमूलक यस मासिक पत्रिकामा प्रकाशित लेख, रचना, चित्रादिमा संस्थाको सहमति हुन आवश्यक नरहेको व्यहोरा अवगत गराइन्छ।

## आश्रमका नियमित कार्यक्रमहरू

प्रत्येक साँझ ५ बजे गुरु आरती। प्रत्येक बृहस्पतिबार बिहान १० बजे गुरु पूजन। प्रत्येक अंग्रेजी महिनाको २१ तारीख दिव्य गुरु महोत्सव कार्यक्रम। प्रत्येक महिनाको पहिलो सोमबार पशुपति मृगस्थलीस्थित श्री श्री महायोगी गुरु गोरखनाथको मन्दिर प्रांगणमा श्री शिव गोरक्ष हवन, पहिलो मंगलबार लगनखेलस्थित वटुक भैरव मन्दिर प्रांगणमा तान्त्रोक्त वटुक भैरव हवन, पहिलो बुधबार लगनखेलस्थित महालक्ष्मी मन्दिर प्रांगणमा तान्त्रोक्त महालक्ष्मी हवन तथा पहिलो बिहीबार पाटन कुम्भेश्वरस्थित बगलामुखी मन्दिर प्रांगणमा तान्त्रोक्त बगलामुखी हवन कार्यक्रम सञ्चालन। विभिन्न चाडपर्वहरूमा विशेष कार्यक्रम। गोरक्ष निखिल वाणी आध्यात्मिक शक्ति अनुसन्धानमूलक मासिकको प्रकाशन। विभिन्न एफ.एम. स्टेशनहरूमार्फत् गोरक्ष निखिल सन्देश रेडियो कार्यक्रम सञ्चालन। समाजमा आध्यात्मिक शिक्षा लागू गराउनका लागि गोरक्ष निखिल ज्योति दिव्य विद्याश्रमको सञ्चालन। तान्त्रिक ध्यानका विभिन्न चरणका कक्षाहरू। समय समयमा विशेष साधना कार्यक्रमहरू। प्राणप्रतिष्ठित तान्त्रिक सामग्रीहरूको वितरण। समस्या समाधानका लागि परामर्श सेवा। असाध्य रोगका लागि तान्त्रिक हिलिङको व्यवस्था।

**आवरण तथा भित्री कम्प्युटर सेटिङ्ग**
सिद्धाश्रम शक्ति केन्द्र, कम्प्युटर उपविभाग
ssk.org.np, info@ssk.org.np

**मुद्रण**
**भेराइटी प्रिन्टर्स प्रा.लि.**
कुलेश्वर, काठमाडौं।

**पत्रिकाको कार्यालय**
**बसुन्धरा, काठमाडौं, नेपाल**
**फोन नं: ०१-४३८९१५४, पत्रिका वितरण फोन नं: ०१-६२२५१७७** (CDMA Phone), URL: gnv.org.np, Email: info@gnv.org.np

# आफ्नै कुरा

हिन्दू मात्रको दोस्रो ठूलो चाड दीपावलीको पावन अवसरमा समस्त  महानुभावहरुमा सुख, समृद्धि छाओस्, अज्ञानरुपी अन्धकार हटेर ज्ञानरुपी उज्यालो फैलियोस् र माता महालक्ष्मीको कृपा, आशीर्वाद, अनुकम्पा प्राप्त हुँदै जाओस् भनी परमपूज्य सद्‌गुरुदेवहरुको चरणकमलमा प्रार्थना गर्दै शुभकामना व्यक्त गर्दछौँ ।

चाडपर्वको आफ्नै गरिमा, महिमा र महत्त्व रहेको हुन्छ । चाडपर्वको सांस्कृतिक, ऐतिहासिक, धार्मिक, आध्यात्मिक महत्त्वलाई बिर्सेर केवल खाने-पिउने र लाउनेमा मात्रै यसलाई सीमित बनाउनु ठूलो विडम्बना मान्न सकिन्छ ।  दीपावलीमा पनि यही विडम्बना दोहोरिरहेको पाइन्छ । बाहिरीरुपमा मात्रै झिलीमिली उज्यालो गरेर भित्र कलुषित मन राखेर दीपावलीको आध्यात्मिक रहस्यलाई उजागर गर्न सकिन्न । यसका लागि त भित्रको अन्तःष्करणरुपी घर, आँगनमा काम, क्रोध, लोभ, मोह, अहंकाररुपी अन्धकार हटाएर ज्ञानको प्रकाश बाल्नुपर्छ । दीपावलीको धार्मिक, आध्यात्मिक रहस्य पनि यही हो । जबसम्म भित्रको अन्धकार हटाउन सकिन्न तबसम्म बाहिरी परिश्रम र पूजा अर्चनाले अपेक्षित लाभ प्राप्त हुन सक्दैन । यही रहस्यको पर्दाफास यसपालिको दीपावलीले गर्न सकोस्, व्यक्ति आफ्नो संकीर्ण सोचाई हटाएर विशाल बन्न सकून्, ब्रह्माण्डीय भावभूमिमा बसेर सत्यलाई आत्मसात् गर्न सकून्, जीव भावलाई हटाएर शिव भावमा प्रवेश गर्न सकून्, माता महालक्ष्मीसँग यही प्रार्थना गर्दछौँ।

यसपालि हामीले यस अंकलाई 'महालक्ष्मी विशेष'का रुपमा निकालेका छौँ । माता महालक्ष्मीको वास्तविक स्वरुपलाई चिनेर माता महालक्ष्मीको कृपा, आशीर्वादले जीवनलाई नै धन्य पार्नु मानवजीवनको श्रेष्ठ पुरुषार्थ हो । यसै जीवनमा धर्म, अर्थ, काम र मोक्षतिर अघि बढ्न पनि माता महालक्ष्मीकै कृपा, आशीर्वाद आवश्यक पर्छ । दीपावलीको पावन अवसरमा सबैले चार पुरुषार्थलाई सिद्ध गर्न सकून् भन्ने शुभेच्छा पनि प्रकट गर्न चाहन्छौँ।

अन्तमा, यस अंकमा भए गरेका कमी कमजोरी, न्यूनताहरुका लागि परमपूज्य सद्‌गुरुदेवहरुसमक्ष र यहाँहरुसमक्ष पनि क्षमायाचना गर्दछौँ र यहाँहरुको सल्लाह सुझावको अपेक्षा गर्दछौँ । अस्तु !

परमपूज्य सद्गुरुदेव परमहंस स्वामी श्री निखिलेश्वरानन्द महाराज

परमपूज्य सद्गुरुदेव श्री श्री महायोगी गुरु गोरखनाथ

मानव जीवनमा गुरुको सर्वथा उच्च स्थान मानिन्छ। गुरु प्राप्तिबिना मानव जीवन व्यर्थ छ। सम्पूर्ण शास्त्रको सम्यक् ज्ञान भए पनि, धन सम्पत्ति र रूप लावण्यले भरिपूर्ण भए पनि, समस्त प्रकारका सिद्धि, शक्ति र ऐश्वर्यले भरिपूर्ण भए पनि यदि गुरु प्राप्त भएको छैन भने मानिस अपूर्ण नै हुन्छ किनकि गुरुले नै संसार सागरबाट तारेर हामीलाई मोक्षको भागीदार बनाउनुहुन्छ, हामीलाई असीम आनन्दबाट तृप्त गरेर पूर्ण गरिदिनुहुन्छ। यसप्रकार पूर्णता, मुक्ति अनि अनगिन्ती सिद्धि र शक्ति प्रदान गर्नुहुने दुई सद्गुरुदेवहरूलाई सिद्धाश्रम शक्ति केन्द्रले धारण गरिरहेको छ। गुरुहरूको महिमा, गरिमा र परिचय कसले पो दिन सक्छ र ? तैपनि सामान्य जानकारीसम्मका लागि महान् गुरुहरूको संक्षिप्त परिचय दिएका छौँ–

### परमहंस स्वामी श्री निखिलेश्वरानन्द महाराज

*वन्दे नारायणं देवं सद्गुरुं निखिलेश्वरं ।*
*ज्ञानामृतरसेनैव पूतं येनाखिलं जगत् ॥*

यस विश्व ब्रह्माण्डलाई भौतिक एवं आध्यात्मिकरूपले सन्तुलित राख्न प्रकृतिद्वारा निर्मित अद्वितीय तपस्थली नै सिद्धाश्रम हो । मानव जीवनको अन्तिम ध्येय यस सिद्धाश्रमका प्राणाधार परमपूज्य सद्गुरुदेव परमहंस स्वामी श्री निखिलेश्वरानन्द महाराज हुनुहुन्छ। आफ्ना गुरु स्वामी सच्चिदानन्दज्यूको आदेश शिरोपर गरी 'धर्मसंस्थापनार्थाय...'को शंखघोष गर्दै उहाँ सन् १९३३ अप्रिल २१ तारीखमा भारतस्थित राजस्थान प्रान्तको जोधपुरमा अवतरित हुनुभयो। वेदाध्ययनबाट शिक्षा शुरु गर्नुभएका उहाँको विवाह बाह्र वर्षको उमेरमा भगवती देवीसँग भयो। आफ्नो जीवन परिवारको लागि मात्र नभएर सम्पूर्ण समाजको लागि हो भन्दै विवाहपश्चात् उहाँले थुप्रै वर्ष हिमालयका गुफा, विकट कन्दरा र जंगलहरूमा संन्यास जीवन बिताउनुभयो। त्यसबेला उहाँले विभिन्न स्वामी, संन्यासी, योगी, तान्त्रिक, मान्त्रिक, आयुर्वेदाचार्यहरूसँग भेटेर विभिन्न विधामा आफूलाई निष्णात् बनाउनुभएको थियो। संन्यास जीवनपश्चात् पुनः गृहस्थमा फर्केर आफूले प्राप्त गरेको आध्यात्मिक ज्ञानलाई समाजमा फैलाउने कार्य गर्नुभयो। यसको लागि सयौं पुस्तकहरूको रचना गर्दै असंख्य शिविर सञ्चालन गरी साधना, प्रवचन र दीक्षाको माध्यमबाट शिष्य निर्माण प्रक्रियालाई जोड दिनुभयो। यसरी ज्योतिष, सामुद्रिक शास्त्रका सुविज्ञ ज्ञाता, तन्त्र-मन्त्रका अन्तिम नाम, आधुनिक धन्वन्तरि, सम्मोहन विज्ञानका मसीहा, कुण्डलिनी शक्तिका सहज व्याख्याकार, सूर्य विज्ञानका अपूर्व ज्ञानी, धुरन्धर रत्न चिकित्सक आदिका रूपमा उहाँ **डा. नारायणदत्त श्रीमाली**को नामबाट विश्वमा विख्यात् हुँदै महामहोपाध्याय, मन्त्र शिरोमणि, समाज शिरोमणि, जगद्गुरु आदिको संज्ञाले विभूषित हुनुभयो। आगामी गोरक्ष निखिल युग निर्माणको महायोजना आफ्ना शिष्यहरूको काँधमा सुम्पेर सन् १९९८ जुलाई ३ मा महाप्रयाण लिई उहाँ आफ्नो मूल स्थान सिद्धाश्रम फर्कनुभयो। हाल सद्गुरुदेवकै सूक्ष्म आदेश निर्देशनबमोजिम सिद्धाश्रम शक्ति केन्द्र यस महान् योजनामा कटिबद्ध छ।

### श्री श्री महायोगी गुरु गोरखनाथ

*अनन्त कोटि ब्रह्माण्ड गोरक्ष स चराचरम् ।*
*दर्शनम् मुक्ति लाभं च तस्मै श्री गोरक्ष नमः ॥*

श्री श्री महायोगी गुरु गोरखनाथ सम्पूर्ण गुरुहरूमा महागुरु, सम्पूर्ण योगीहरूमा महायोगी, सम्पूर्ण नाथहरूमा महानाथ हुनुहुन्छ। महायोगी श्री श्री गुरु गोरखनाथ भगवान् शिवका सबैभन्दा महत्त्वपूर्ण र प्रमुख अवतारको रूपमा पूजित हुनुहुन्छ। योग मार्गको प्रचारको लागि भगवान् शिवले नै गोरक्ष रूप धारण गर्नुभएको हो। यसैले उहाँलाई श्री शिव गोरक्षको रूपमा आदर-सम्मान गर्ने गरिन्छ। गो शब्दको अर्थभित्र समाहित गाई, पृथ्वी, इन्द्रिय, आदि सम्पूर्णको रक्षा गर्ने गोरक्ष नै हुनुहुन्छ। श्रीमद्भागवत, नारदपुराण, स्कन्दपुराण, ब्रह्माण्डपुराण, शिवपुराण, शाक्तप्रमोद, गोरक्षगीता आदिमा उहाँको बारेमा उल्लेख भएको छ। विश्वको इतिहासलाई हेर्दा उहाँको प्राकट्य सयौं हजारौं वर्षको अन्तरालमा विभिन्न स्थानमा भएको पाइन्छ। यसबारे विभिन्न विद्वान्हरूले थुप्रै अनुसन्धान गरेका छन्। आमाको कोखबाट नभई आवश्यकता अनुसार आफै प्रकट हुनुहुने महायोगी अजर अमर कायायुक्त हुनुभएको कुरा स्पष्ट हुन्छ।

नेपालको सन्दर्भमा हेर्दा गोरखा राज्यको नामाकरण उहाँको नामबाट भएको पाइन्छ भने उहाँकै आशीर्वादबाट यो राष्ट्र कहिल्यै पराधीन बन्नु नपरेको गौरवशाली इतिहास रहेको छ। उहाँको ऋण चुकाउन पनि हामीले उहाँको भक्ति गर्नैपर्दछ। नाथपंथका अग्रज महानाथ गुरु गोरखनाथ नेपालका राष्ट्रगुरु हुनुहुन्छ। नेपालमा विभिन्न ठाउँमा उहाँका मठ-मन्दिरहरू छन् जस्तै गोरखाको गोरख गुफा, पशुपतिको मृगस्थली पीठ, हनुमानढोकाको काष्ठमण्डप आदि। सिद्धाश्रम शक्ति केन्द्रको अनुसन्धानअनुसार गुरु गोरखनाथ सर्वप्रथम यस धरतीमा वैशाख शुक्ल पूर्णिमाको दिन गोरखाको गोरख गुफामा प्रकट हुनुभएको थियो। नेपालमा मात्र नभएर विश्वभर उहाँको सम्प्रदाय, मन्दिर एवं मठहरू स्थापित छन्। आगामी गोरक्ष निखिल युग निर्माणको लागि गोरक्ष शक्ति जगाउँदै नाथ परम्परालाई समाजमा स्थापित गर्न सिद्धाश्रम शक्ति केन्द्र गतिशील छ।

## प्रार्थना

**आसीना सरसीरूहे स्मितमुखी हस्ताम्बुजैर्विभ्रती**
**दानं पद्म युगामये च वपुषा सौदामिनी सन्निभां**
**मुक्ताहार विराजमान पृथुलोतुंगस्तनोभासिनी**
**पायाद् षः कमला कसक्ष विभवैरानन्दयन्ती हरिम् ।।**

*कमलासनमा विराजनमान, मधुर मुस्कानबाट सुशोभित, चार भुजाहरूबाट युक्त, दुवै हातमा स्थित कमल पुष्पले अभयदान दिइरहनुभएकी, बिजुलीको चमस्कृतिसमान शारीरिक तेजयुक्त, मोतीको हारले सुशोभित, स्थूल र उच्च स्तन भएकी भगवती कमला आफ्ना कटाक्षले भगवान् विष्णुलाई प्रसन्न गर्नुहुने, हाम्रो रक्षा गर्नुहोस् ।*

# लक्ष्मीको पूर्ण स्वरूप

भगवती लक्ष्मीको नाम नसुन्ने शायदै कोही होलान् । संसारमा सम्भवत: लक्ष्मी माताकै बढी उपासक, आराधक र भक्तहरू होलान् । तर विडम्बना यो छ कि माता लक्ष्मीको बारेमा यस संसारमा धेरै भ्रान्ति फैलिएको छ । सामान्यरूपमा लक्ष्मीको तात्पर्य धन र ऐश्वर्यसँग जोडिएको पाइन्छ । रूपैँया, पैसा र भोग विलासलाई नै लक्ष्मी मान्ने गरिएको पाइन्छ । लक्ष्मी आफैमा सम्पूर्ण महामाया हुन् जसले जगतको संचालनमा श्रीविष्णुको सहयोगी भएर कार्य गर्छिन् । यो संसार लक्ष्मीको आधारभूत शक्तिबाट चल्छ । संसारमा लक्ष्मी नहुँदा हुन् त जगत पालनको क्रिया पनि पूर्णरूपले रोकिन्थ्यो ।

लक्ष्मी यस विराट जगतकी महादेवी हुन् । लक्ष्मी शब्द संस्कृतको शब्द 'लक्ष्'बाट बनेको हो अर्थात् लक्ष्मीले यस जगतको लक्ष्यलाई प्रकट गर्छिन् । यो लक्ष्य केवल भौतिक पूर्णता मात्रै नभएर आध्यात्मिक पूर्णताको स्वरूप पनि हो । जसले आफ्नो जीवनमा भौतिकताको लक्ष्यलाई पूर्णरूपले प्राप्त गरेको छ, आध्यात्मिक लक्ष्यलाई पनि पूर्णरूपले प्राप्त गरेको छ, उसैलाई पूर्ण पुरुष भन्न सकिन्छ । सर्वत्र लक्ष्मीलाई स्त्रीरूपमा परिभाषित गरिएको पाइन्छ

**लक्ष्मीका चार हात चारै दिशातिर फैलिएका छन्, यसले ब्रह्माण्डका चारै दिशालाई प्रकट गर्दछ र यो स्पष्ट गर्दछ कि लक्ष्मी चारै दिशालगायत आकाश, पातालमा पनि विद्यमान छिन्, चारै दिशामा उनको पूर्ण महत्त्व छ ।**

किनकि शक्ति मूलरूपमा स्त्री तत्त्वले युक्त हुन्छ र यो सुन्दरता र प्रेमले पनि युक्त हुन्छ ।

ऋग्वेदमा लक्ष्मीको वर्णन गर्दै उनलाई 'चञ्चला' भनिएको छ जो एकै ठाउँमा स्थिर हुँदैनन् । महाभारतमा लक्ष्मीको विवरणमा गर्वोन्त एवं इच्छाधारिणी बताइएको पाइन्छ जो आफ्नो इच्छानुसार विचरण गर्दछिन् । उनी जहाँ निवास गर्दछिन्, पूर्ण गर्वका साथ निवास गर्दछिन्, कसैको बन्धन र अंकुशमा आउँदैनन् ।

सामान्यरूपले लक्ष्मीलाई स्त्रीरूपमा चतुर्भुज अर्थात् चार हातले युक्त स्पष्ट गरिएको हुन्छ । यसका साथै भेषभूषामा लक्ष्मीलाई स्वर्ण रेखाले युक्त रातो वस्त्र धारण गराइएको पाइन्छ । उनको एउटा हातबाट स्वर्णमुद्रा तल झरिरहेको देखाइएको हुन्छ भने कमलको फूल धारण गरिरहेको पनि देखिन्छिन् तथा उनलाई पूर्णरूपमा फुलेको कमलको फूलमा उभिएर बसिरहेकी मुद्रामा देखाइएको हुन्छ । कमलको फूललाई धारण गर्ने र यसको आसनमा बस्ने हुनाले लक्ष्मीलाई 'कमला' पनि भनिन्छ ।

कमलको फूललाई पूर्ण शुद्धताको स्वरूप मानिन्छ । यो भगवान् विष्णुको प्रतीक हो अर्थात् जगतका प्रतिपालकको स्वरूप हो । त्यसमाथि लक्ष्मी आधारित छिन् । यसका साथै लक्ष्मीका दुवैतिर दुई हात्तीले आफ्नो सूँड उठाइरहेको देखाइएको पाइन्छ । यसको पनि धेरै अर्थ रहेको छ ।

लक्ष्मीका चार हात चारै दिशातिर फैलिएका छन्, यसले ब्रह्माण्डका चारै दिशालाई प्रकट गर्दछ र यो स्पष्ट गर्दछ कि लक्ष्मी चारै दिशालगायत आकाश, पातालमा पनि विद्यमान छिन्, चारै दिशामा उनको पूर्ण महत्त्व छ ।

लक्ष्मीको रातो वस्त्रले 'क्रिया'लाई परिभाषित गर्छ । रातो रङ तीव्रताको प्रतीक हो । रगतको रङ पनि रातै हुन्छ । जबसम्म यो शरीरमा प्रवाहित हुन्छ तबसम्म शरीरले क्रिया गर्दछ । त्यसरी नै बाह्यरूपमा पनि रगतजस्तै लक्ष्मीको रातो वस्त्रले जगतको क्रियालाई स्पष्ट गर्दछ । जबसम्म यो तत्त्व विद्यमान रहन्छ तबसम्म संसारमा क्रियाहरू चल्दछन् र प्रत्येक प्राणी, चाहे त्यो मनुष्य होस् वा पशुपंक्षी, जगतमा क्रियाशील हुन्छन् ।

लक्ष्मीको वस्त्रमा सुनको रङजस्तो किनारा स्पष्ट गरिएको पाइन्छ । यो स्वर्ण रङ उन्नति र प्रगतिको परिचायक हो । अत: यी दुवै रङले सङ्केत गर्दछ कि लक्ष्मीले जगतलाई प्रगति, उन्नति र वैभव प्रदान गर्दछिन् र सधैं यही क्रिया गर्नका लागि सदैव तत्पर रहन्छिन् । लक्ष्मीको जुन हातमा मुद्रा आभूषण देखाइएको छ, त्यो हात तलतिर देखिन्छ अर्थात् लक्ष्मी सदैव प्रदान गर्ने देवी हुन् र उनले जगतलाई धन प्रदान गर्दछिन्, आफैसँग संग्रह गरेर राख्ने देवी उनी होइनन् ।

लक्ष्मी सदैव कमलको आसनमा उभिरहेकी देखिन्छिन् । कमलको फूल जस्तोसुकै पानीमा फूले पनि त्यसमाथि पानीको एक थोपा पनि जम्न

**लक्ष्मीको जुन हातमा मुद्रा आभूषण देखाइएको छ, त्यो हात तलतिर देखिन्छ अर्थात् लक्ष्मी सदैव प्रदान गर्ने देवी हुन् र उनले जगतलाई धन प्रदान गर्दछिन्, उनी आफैसँग संग्रह गरेर राख्ने देवी होइनन् ।**

**यसैप्रकार लक्ष्मीको अगाडिको दुई हातले भौतिक जगतको क्रियालाई स्पष्ट गर्दछ र पछाडिका दुई हातले आध्यात्मिक क्रियालाई संकेत गर्दछ जसबाट व्यक्ति पूर्णरुपले आध्यात्मिक आत्म सुखतिर अग्रसर हुन सक्छ ।**

पाउँदैन । अर्थात् लक्ष्मी सदैव क्रियाशील हुन्छिन् । जो क्रियाशील रहन्छ, ऊ नै लक्ष्मीको अधिकारी हुन्छ । कमलको फूलको आसनको तात्पर्य यही हो कि हिलोसमान माया र मोहले भरिएको यस संसारमा आएर मानिसको भावना, विचार, क्रिया अशुद्ध हुन सक्छन् । तर यदि ऊ आफ्नो जीवनलाई कमलसमान राख्न क्रियाशील हुन्छ भने लक्ष्मी उसको सहयोगी बन्छिन् । ऊ चारैतिर फैलिएको संसारमा रहेर त्यसमा नडुबोस्, कमलजस्तै संसारमा पूर्णरूपले फूलेर संसारबाट अलग रहोस् ।

लक्ष्मीको चतुर्भुज स्वरूप अर्थात् चार हात यस जगतको चार ध्रुवसत्य धर्म अर्थात् जुन कार्य सही र सत्य छ, अर्थ अर्थात् आवश्यकतानुसार धन होस्, काम अर्थात् जीवनका सकारात्मक, शुद्ध र सही इच्छाहरू तथा मोक्ष अर्थात् संसार चक्रमा बारम्बार जन्म-मरणको बन्धनबाट मुक्त भएर पूर्णत्व प्राप्त गर्नुलाई लक्ष्मीका चार हातले स्पष्ट गर्दछन् ।

यसरी नै लक्ष्मीका अगाडिका दुई हातले भौतिक जगतको क्रियालाई स्पष्ट गर्दछ र पछाडिका दुई हातले आध्यात्मिक क्रियालाई सङ्केत गर्दछ जसबाट व्यक्ति पूर्णरूपले आध्यात्मिक आत्म सुखतिर अग्रसर हुन सक्छ ।

जसरी मानिसको शरीरमा दायाँ भागले क्रियालाई स्पष्ट गर्दछ, त्यसरी नै लक्ष्मीको दायाँ हातको अग्र भागले क्रियालाई स्पष्ट गर्दछ र पछाडिको हात जसले कमलको फूल लिएको छ, यो यस कुराको प्रतीक हो कि व्यक्तिले धर्मानुसार आफ्नो जीवनमा सबै क्रियाहरू गरुन् र धर्म अर्थात् धारण गर्न योग्य विचार, क्रियाबाट नै व्यक्ति मोक्षतिर अग्रसर हुन सक्छ । यो मोक्ष कमलजस्तै हुन्छ जसलाई भगवती लक्ष्मीले आफ्नो दाहिने हातमा लिएकी छिन् ।

लक्ष्मीको बायाँ हातमा स्वर्ण मुद्रा झरिरहेको देखाइएको हुन्छ जसबाट यो स्पष्ट हुन्छ कि माताले आफ्ना भक्तहरूलाई धन, ऐश्वर्य, सम्मान प्रदान गर्दछिन् । यसरी नै दाहिने हातमा आशीर्वाद मुद्रा पनि छ र एकप्रकारले यसले मानिसलाई जीवनमा धनमा मात्रै नहराउन पटकपटक सोच्नका लागि पनि सङ्केत गर्दछ । लक्ष्मीले आशीर्वाद दिँदै जीवनको लक्ष्य के हो भन्ने कुरालाई हर समय सोच्न संकेत गर्दछिन् । पछाडिको बायाँ हातमा कमलको फूल छ, यसले पनि मोक्षतिरै सङ्केत गर्दछ ।

लक्ष्मीका दुवैतिर दुई हात्ती उभिएर जलको वर्षा गरिरहेको देखाइएको हुन्छ । यी दुवै हात्तीले व्यक्तिको जीवनमा लक्ष्मीका साथ नाम र सम्मानलाई प्रकट गर्छन् । लक्ष्मीका सच्चा साधकले केवल नाम र सम्मान प्राप्त गर्नका लागि मात्रै जीवनमा क्रिया नगरुन्, न त सांसारीक इच्छाहरू प्राप्त गर्नका लागि नै जीवनलाई मेटाउन्, बरु धन, नाम र गुण अरूलाई पनि बाँड्न् भन्ने यसले सङ्केत गर्छ । दुई वा कतै कतै चार हात्तीद्वारा गरिएको जल वर्षाले निरन्तर क्रियाशक्तिलाई स्पष्ट गर्दछ । हात्तीहरूद्वारा

**लक्ष्मीका सच्चा साधकले केवल नाम र सम्मान प्राप्त गर्नका लागि मात्रै जीवनमा क्रिया नगरुन्, न त सांसारीक इच्छाहरु प्राप्त गर्नका लागि नै जीवनलाई मेटाउन्, बरु धन, नाम र गुण अरुलाई पनि बाँड्न् भन्ने यसले संकेत गर्छ ।**

आफ्ना सूँडमा जुन स्वर्णिम कुम्भ धारण गरेका हुन्छन्, यसले ज्ञान र पवित्रतालाई स्पष्ट गर्दछ किनकि जल नै जीवनको प्रतीक हो र यो वर्षा अविरल भइरहेको छ, यसको तात्पर्य यो हो कि निरन्तर स्वप्रयासले आफ्नो धर्मानुसार जीवन जिएर जो ज्ञान र शुद्धताबाट परिचालित हुन्छ, उसलाई सांसारीक सफलता र आध्यात्मिक उन्नति प्राप्त हुन्छ ।

अत: यो स्पष्ट छ कि मानिसको जीवनमा निरन्तर क्रिया, धर्म, ज्ञान र आचरणमा पवित्रता आवश्यक छ, यही कुरालाई लक्ष्मीले आफ्नो मुद्राबाट स्पष्ट गर्दछिन् । सामान्यरूपले लक्ष्मीका आठ स्वरूप पूजित छन् । यी आठ रूप प्रत्येक व्यक्तिको जीवनमा आवश्यक छ । लक्ष्मीका आठ स्वरूप यी हुन्–

१. आदिलक्ष्मी– उत्पत्ति,
२. सन्तानलक्ष्मी– जीवनमा निरन्तरता,
३. गजलक्ष्मी– शान्त भावले जीवनमा निरन्तर क्रिया,
४. धनलक्ष्मी– जीवनमा अर्थ प्राप्ति,
५. धान्य लक्ष्मी– शरीरलाई पूर्ण निरोगी राख्नका लागि अन्न र वनस्पति तत्त्व आवश्यक हुन्छन् र यसको स्वरूप धान्यलक्ष्मी हुन्,
६. विजयलक्ष्मी– बाधाहरूबाट मुक्ति पाउनका लागि संघर्ष गर्ने क्षमता र संघर्षमा विजय हुने इच्छा विजयलक्ष्मीको स्वरूप हो,
७. वीरलक्ष्मी– जीवनबाट डरको भाव, भयको भाव दूर गरेर निर्भय भएर जीवन जिउने शक्तिको स्वरूप वीरलक्ष्मी हो,
८. ऐश्वर्यलक्ष्मी– संसारमा चारैतिर हजारौं सुख फैलिएका छन्, यसलाई आफ्नो इच्छानुसार प्राप्त गरेर सम्मानका साथ पूर्ण जीवन जिउनु ऐश्वर्यलक्ष्मी हुन् ।

यसरी यो स्पष्ट हुन्छ कि लक्ष्मीको तात्पर्य केवल रूपैंयाँ, वस्त्र, आभूषण मात्र होइन, लक्ष्मीको पूर्ण तात्पर्य त धन, धान्य, वीरता, ऐश्वर्य, सम्मान, क्रिया, निरन्तर प्रगति, जीवनमा उत्पादकता एवं निरन्तरता, लक्ष्यको प्राप्तिका लागि सदैव प्रयत्नशील र क्रियाशील रहनुलाई स्पष्ट गर्दछ । यही जीवनका आठ गुण हुन् जसको माध्यमबाट जीवन पूर्ण हुन सक्छ, मनुष्य भौतिकरूपले जिउँदै अध्यात्मतिर अग्रसर हुन सक्छ ।

जय गुरुदेव !

---

**कमलको फूल जस्तोसुकै पानीमा फुले पनि त्यसमाथि पानीको एक थोपा पनि जम्न पाउँदैन । अर्थात् लक्ष्मी सदैव क्रियाशील हुन्छिन् । जो क्रियाशील रहन्छ, ऊ नै लक्ष्मीको अधिकारी हुन्छ ।**

---

# शिष्यको प्रसन्नता, मेरो प्रसन्नता

*लक्ष्मीको तात्पर्य के हो ? के लक्ष्मीले व्यक्तिलाई संस्कारी बनाउन सक्छिन् ? लक्ष्मी प्राप्त भएपछि आनन्दले भरिएको जीवन जिउन सकिन्छ के ? लक्ष्मी स्थायीरूपमा रहन सक्ने वातावरण हाम्रो घर परिवारमा छ र ? प्रत्येकको जीवनमा जोडिएका यस्ता विशेष प्रश्नहरूको समाधान सद्गुरुदेवको ओजस्वी वाणीमा प्रस्तुत छ–*

***लक्ष्मीश्च त्वं वरदा भवेत परिशं***
***ज्ञानों वता वर्षिणी***
***पूर्व पुण्यद नाद्य पूर्व सहितं***
***आनन्द देवों विति,***
***दीर्घो यस्य गृहस्थ पूर्ण महितं***
***सन्मार्ग श्रेयव्या सदैं,***
***पूर्वा वे मय मुक्त रहित गतं,***
***पूर्वो व लक्ष्मीं वदैं ।***

माथिको श्लोक लक्ष्मी उपनिषद्को हो । ऋषिले यसमा भनेका छन्– जीवनको आधार बनेको वर्तमानमा लक्ष्मी रहन्छिन् । भविष्यमा पनि लक्ष्मी रहन्छिन्, धन रहन्छ र रहनु पनि पर्दछ । धनको माध्यमबाट नै जीवनमा तुष्टि मिल्छ, जीवनमा चाहे त्यो धर्म होस्, चाहे अर्थ, चाहे त्यो काम होस् वा मोक्ष, चाहे ऐश्वर्य वा भोग नै किन नहोस्, प्राप्त होऊन् जसबाट मानसिक सन्तोष प्राप्त हुन्छ । यदि व्यक्ति सद्गुरुसँग जोडिएको छ भने ऊ गलत बाटोमा जाँदै जाँदैन । जुन घरमा सही वातावरण हुन्छ, त्यस घरमा व्यक्ति गलत बन्नै सक्दैन ।

**यदि व्यक्तिले शास्त्रको सहारा लिन्छ भने, उसले साधनाको मद्दत लिन्छ भने जोसुकैले पनि भाग्य लिपिलाई बदल्न सक्छ । तर भाग्य लिपिलाई ज्योतिषले बदल्न सक्दैन, तपाईँ बदल्न सक्नुहुन्न, तपाईँको पुरूषार्थले बदल्न सक्दैन ।**

धनको माध्यमबाट नै हामीले आफ्ना इच्छाहरूको पूर्ति गर्न सक्छौँ, धनको माध्यमबाट नै हामीले जीवनमा यश प्राप्त गर्न सक्छौँ, मन्दिर, मस्जिद बनाउन सक्छौँ, देवालय बनाउन सक्छौँ, धार्मिक पुस्तक किन्न सक्छौँ, धनको माध्यमबाट नै दान दिएर, मन्दिरमा धन दिएर समाजमा उन्नतिशील बन्न सक्छौँ, समाजमा सम्मानननीय बन्न सक्छौँ ।

जीवनमा धन, वैभव प्राप्त गर्नका लागि श्रेष्ठ माध्यम हो साधना । साधनाद्वारा नै लक्ष्मीलाई, धनलाई जीवनमा स्थायित्व दिन सकिन्छ । त्यो क्षण जीवनमा धेरै महत्त्वपूर्ण हुन्छ जुन क्षणमा हामी विशेष कुनै पूजन, प्रयोग वा साधना गर्दछौँ । धन प्राप्तिका लागि दीपावलीको दिन साधनाका लागि श्रेष्ठ छ । तर दीपावलीको सम्पूर्ण रातको सबै समयमा पूजन गर्न सकिन्न । दीपावलीको रातिको सिंह वा वृषभ लग्नमा मात्र पूजन हुन्छ ।

### यस्तो किन हुन्छ ?

हामीलाई थाहा छ– लग्नमध्ये स्थिर लग्न पनि छ । लक्ष्मी घरमा स्थिर बनिरहून् भन्ने अभिप्रायले स्थिर लग्नमा मात्र पूजा गरिन्छ । दिनभरिमा तीनपटक चर लग्न आउँछन् । चरको अर्थ हो विचलन । तीनपटक द्विस्वभाव लग्न आउँछन् जुन चर पनि हुन्छ र स्थिर पनि । तीनपटक स्थिर लग्न आउँछन् जसले स्थायित्व प्रदान गर्छ ।

लक्ष्मीको पूजा वा साधना दीपावलीको

राति वृषभ लग्न वा सिंह लग्नमा गरिन्छ । यी लग्नहरू स्थिर लग्न हुन् । यसबेला पूजन गर्दा घरमा लक्ष्मीको स्थायित्व रहन सक्छ । त्यसो त पूरै रात दीपावलीको रात हो । तर स्थिर लग्नमा केही गरिन्छ भने त्यो अत्यन्त उज्ज्वल, श्रेष्ठ र सिद्ध हुन्छ ।

मनुष्यको भाग्यमा लक्ष्मी वा महालक्ष्मी लेखिएको हुनैपर्छ भन्ने पनि छैन । हजारौँ, लाखौँ मानिसहरू यस्ता पनि हुन्छन् जो दरिद्र छन्, गरीब छन्, निर्धन छन्, असहाय छन् किनकि उनीहरूको भाग्यमा यी नै कुरा लेखिएका हुन्छन् । उनीहरू परिश्रम पनि खुबै गर्छन्, भागदौड गर्छन्, यसो गर्दा पनि उनीहरू कहाँ धनको स्थायित्व रहन पाउँदैन ।

उनीहरूको जीवनमा धनै लेखिएको हुँदैन । त्यसैले खुब परिश्रम गर्दा पनि लक्ष्मीको प्राप्ति हुँदैन । उनीहरूको परिश्रममा कुनै पनि कमी

***पुरूषार्थ गर्न त तपाईंझले भ्याउनु भएकै छ । मेहनत गर्नमा तपाईंझले कुनै कसर छोड्नु भएको छैन । यति धेरै मेहनत गरेपछि पनि जीवनमा धनको प्राप्ति हुन सकेन, कारखाना बन्द गर्नुपर्‍यो, मिल चल्न सकेन, पसल पफस्टाउन सकेन वा घरमा निर्धनता रहिरहन्छ भने के भन्ने ?***

छैन, उनीहरू अति मेहनत गर्छन्, मजदूरी गर्छन्, नोकरी गर्छन्, व्यापार गर्छन्, आफ्नो पसललाई सबैभन्दा पहिले खोल्छन् । यसो गर्दा पनि उनीहरूको पसलमा ग्राहक आउँदैनन् जबकि सँगैको पसल भने खुब चलेको देखिन्छ । यस्तो किन हुन्छ ?

यसको कारण यो हो कि जुन लाइन लक्ष्मीको स्थायित्वका लागि चाहिन्छ, विधाताले उसको भाग्यमा त्यो लाइन लेख्नु भएकै हुँदैन । लेख्नु भएको भए पनि कमजोर लेख्नु भएको हुन सक्छ । तर सा चनीय छ, भाग्यमा महालक्ष्मीको लाइन अङ्कित भएको छैन भने के त उसले जीवनभरि गरीबीमा नै बिताउनु पर्ने हुन्छ ?

शास्त्रको भनाइ छ– यस्तो हुनै सक्दैन । यदि व्यक्तिले शास्त्रको सहारा लिन्छ भने, साधनाको मद्दत लिन्छ भने जोसुकैले पनि भाग्य लिपिलाई बदल्न सक्छ । तर भाग्य लिपिलाई ज्योतिषले बदल्न सक्दैन, तपाईँ बदल्न सक्नुहुन्न, तपाईँको पुरुषार्थले बदल्न सक्दैन ।

पुरुषार्थ गर्न त तपाईँले भ्याउनु भएकै छ । मेहनत गर्नमा तपाईँले कुनै कसर छोड्नु भएको छैन । यति धेरै मेहनत गरेपछि पनि जीवनमा धनको प्राप्ति हुन सकेन, कारखाना बन्द गर्नुपर्‍यो, मिल चल्न सकेन, पसल

फस्टाउन सकेन वा घरमा निर्धनता रहिरहन्छ भने यसलाई के भन्ने ? कैयौंपटक देख्नुभएकै होला कि तपाईंले अरूलाई गाइड गर्नुहुन्छ । तपाईंले भनेअनुसार हिँडेर मानिस सफल पनि हुन्छ । तर तपाईं भने सफल हुन सक्नुहुन्न । यस्तो यस्तो गर्नू, तिम्रो काम हुन्छ भनेर तपाईंले उसलाई भनिदिँदा उसको भने काम चल्छ जबकि तपाईं भने बस्याबस्यै हुन्छ । तपाईंको भाइ सम्पन्न हुन्छ तर तपाईं भने हुन सक्नुहुन्न ।

**यो कस्तो स्थिति हो ?**

यो स्थिति भाग्यमा अपूर्णताको कारणले हुन्छ र विधाताले प्रत्येक व्यक्तिको जीवनमा कुनै न कुनै कमी राख्नु भएको हुन्छ । कसैसित धन छ त पुत्र छैन, धन र पुत्र छन् भने स्वास्थ्य छैन, यी तीनै चीज छन्, तर घरमा शान्ति छैन वा शत्रुबाधा धेरै छ । यी सबै दु:ख छैनन् भने पनि राज्यबाट कुनै समस्या छ जसको कारण अनुकूलता मिल्न सकिरहेको छैन । जीवनमा सबै सुख मिल्न सक्दैन ।

मानिसको तात्पर्य हो कि जीवनमा सबै सुखको भोग होस्, जीवनमा सबै कुरा देखून्, आनन्दको अनुभव होस् । म शिष्यहरूलाई भन्छु कि भोको मर्नु जरुरी छैन, व्रत, उपवास गर्नु जरुरी छैन । भगवान्ले धेरै भोग्य वस्तु बनाउनु भएको छ– होटेल बनाउनु भएको छ, रेष्टुरेण्ट बनाउनु भएको छ, राम्रा कपडा बनाउनु भएको छ र यी सबै तपाईंहरूका लागि हुन् । विज्ञानले यसकारण यति धेरै प्रगति गरेको छ कि तपाईंद्वारा यसको प्रयोग होऊन् । तपाईं विदेश जानुहोस्, घुम्नुहोस् भनेर हवाइजहाज बनाइदिए । तर तपाईं न त जान सक्नुहुन्छ, न त घुम्न नै सक्नुहुन्छ । यसैले सक्नुहुन्न कि तपाईंसँग सक्षम गुरु हुनुहुन्न, तपाईंसँग यस्तो कुनै साधना छैन, यस्तो कुनै मार्ग छैन जुन मार्ग भएर तपाईं त्यस ठाउँमा पुग्न सक्नुहुन्छ जुन ठाउँ आफैमा पूर्ण भोग र मोक्षको स्थान हो ।

भोगको अर्थ अय्यासी होइन, भोगको अर्थ कुनै स्त्रीसँगको उठबस होइन । भोगको अर्थ त आनन्दले पूर्ण त्यस जीवनलाई प्राप्त गर्नु हो र सारा कुराको उपयोग गर्नु हो ।

तपाईंलाई डाक्टरले खान मनाही गरेका छन् र तपाईं बसी बसी हेरिरहनुभएको छ, दालको पानी पिइरहनुभएको छ किनकि डाक्टरले भनेका छन् कि दालको पानी बाहेक अन्य केही पनि खान मिल्दैन । तपाईं कहाँ काम गर्नेहरू मजासँग हलुवा पुरी चपाइरहेका छन् र तपाईं भने यो सबै हेरेर बस्न बाध्य हुनुहुन्छ, उनीहरू तपाईंको घरको घिउ पिइरहेका छन् तर तपाईं भने तुलुतुलु हेरिरहनुभएको छ । हामीले जीवनमा सबै कुरा भोग गर्न सकौं । हामीसँग घर होस्,

**यसको कारण यो हो कि जुन लाइन लक्ष्मीको स्थायित्वका लागि चाहिन्छ, विधाताले उसको भाग्यमा त्यो लाइन लेख्नु भएकै हुँदैन । लेख्नु भएको भए पनि कमजोर लेख्नु भएको हुन सक्छ । तर सोचनीय छ, भाग्यमा महालक्ष्मीको लाइन अङ्कित भएको छैन भने के त उसले जीवनभरि दरिद्र नै रहनु पर्ने हुन्छ ?**

राम्रोभन्दा राम्रो पलङ होस्, हामी होटेलमा गएर खान सकौँ, बस्न सकौँ ।

साधकको अर्थ यो कदापि होइन कि हामी होटेलमा जानै हुँदैन । हामी होटेलमा जाऔँ, घुमौँ र हेरौँ र मीठो खाना खाएर आऔँ । यो कुनै पाप होइन । म तपाईंलाई कुनै साधु वा तपस्वी बनाउन चाहन्न । म चाहन्छु कि तपाईं साधक बन्नुहोस्, भोग पनि गर्नुहोस्, मोज पनि गर्नुहोस् तर अय्यासी नबन्नुहोस् । पाप कर्ममा रत नहुनुहोस्, नराम्रो प्रकृति तपाईंमा हाबी नहोऊन्, तपाईं आफ्नै दृष्टिमा नगिर्नुहोस् ।

म तपाईंलाई भोग र मोक्ष दुवै दिनमा समर्थ छु । जीवनमा दुवै पक्ष हुनु आवश्यक छ । त्यसैले त शास्त्रमा भनिएको–

**भोगश्च मोक्षश्च करस्थएव ।**

हाम्रा सबै ऋषिहरूले भोग र मोक्ष दुवैलाई प्राप्त गरेका थिए । एकजना ऋषि पनि ब्रह्मचारी थिएनन् । सबै विवाहित थिए । चाहे विश्वामित्र हुन्, चाहे वशिष्ठ, अत्रि हुन् वा कणाद र पुलस्त्य । कुनै देवता पनि कुमार छैनन् र सबै देवताका अनुहार नियाल्दा रातापिरा देखिन्छन् । तपाईंको जस्तो धसिएको गाला भएका कुनै देवता पनि छैनन् ।

तपाईं कृष्णको पूजा गर्नुहुन्छ । उहाँको अनुहार रातोपिरो देखिन्छ, अति नै सुन्दर हँसमुख अनुहार छ उहाँको । तपाईं भने मलीन अनुहार लिएर उहाँको आरती गर्नुहुन्छ भने तपाईं के को भक्त ?

धसिएको गाला भएको कुनै देवताको चित्र मलाई देखाउनुहोस्, कुनै देवता यस्ता छैनन्, कुनै ऋषि यस्ता छैनन् । सबै रातापिरा छन् । जगदम्बा, दुर्गा कुनै पनि यस्तो हुनुहुन्न ।

यस्तो फरक किन ? हामी यति साह्रो विरामी, दुर्बल, असहाय किन छौँ ? यो यसकारण हो कि हामी साधनाबाट कट अफ भयौँ, हामी केवल भोगमा मात्रै अगाडि बढ्यौँ । हामीले दोस्रो साइडलाई सजाउँदै सजाएनौँ । यदि सजाएको भए त हाम्रा कारखानाहरू बन्द हुँदैन थिए, व्यापारमा कमी आउँदैन थियो, धनमा न्यूनता आउन सक्दैन थियो, मनमा असन्तोष आउन सक्दैन थियो । हामी वन साइड भयौँ, हामीले जीवनको एक पक्ष मात्रै देख्यौँ ।

जीवनका दुवै पक्षसँग जोडिन सक्यौं भने मात्रै मनुष्यले पूर्णता पाउन सक्छ र जुन दिन संसारले यस रहस्यलाई बुझ्दछ, त्यस दिन संसार सुखी हुन्छ ।

यस रहस्यलाई नबुझेर नै आज अमेरिकामा धेरै मानिस आत्महत्या गर्छन् । संसारमा अन्त कतै पनि यति धेरै मानिसहरू आत्महत्या गर्दैनन् । अमेरिकाका प्रत्येक व्यक्ति धनवान् छन् । फेरि के कमी रह्यो ? कुनै गरीब वा भिखारी त होइनन् उनीहरू । फेरि के कारण होला ?

त्यहाँ उनीहरूसँग सबै छ तर मानसिक शान्ति छैन । उनीहरूको जीवनमा एउटा उद्विग्नता छ, एउटा छल छ । जबसम्म मानसिक शान्ति प्राप्त हुँदैन तबसम्म जीवनमा आनन्द पनि प्राप्त हुन सक्दैन र जीवनमा आनन्द प्राप्त गर्नका लागि धनको पनि उत्तिकै आवश्यकता छ । धनको आवश्यकता आजको युगमा पनि छ र पहिले पनि थियो । तर धनको सदुपयोग होस्, दुरूपयोग नहोस् ।

धनको सदुपयोग तब हुन्छ जब हाम्रा चित्तवृत्तिहरू स्पष्ट हुन्छन् । जब हामी कुनै गुरुको शरणमा हुन्छौं तब हाम्रा केही समय राम्रा कार्यमा व्यतीत हुनेछन् । चौबीस घण्टामा आधा घण्टा मात्रै पनि हाम्रो समय इष्ट, गुरु, देवता, समर्थ गुरु, योग्य गुरु, जीवन्त गुरुको शरणमा व्यतीत होस् । तब जीवनमा आनन्द र पूर्णता आउन सक्छ ।

---

***हाम्रा सबै ऋषिहरूले भोग र मोक्ष दुवैलाई प्राप्त गरेका थिए । एकजना ऋषि पनि ब्रह्मचारी थिएनन् । सबै विवाहित थिए । चाहे विश्वामित्र हुन्, चाहे वशिष्ठ, अत्रि हुन् वा कणाद र पुलस्त्य । कुनै देवता पनि कुमार छैनन् र सबै देवताका अनुहार नियाल्दा रातापिरा देखिन्छन् ।***

गुरुले आफ्ना शिष्यलाई त्यस ठाउँमा पुऱ्याउनुहुन्छ जहाँ उहाँ पुऱ्याउन चाहनुहुन्छ । सद्गुरुको अर्थ हो– उच्चकोटिको साधनामा सिद्ध व्यक्ति । हेर्दा सामान्य हुन्छन्, सरल हुन्छन् । सुदामा दरिद्र थिए, फाटेका लुगा लगाउँथे । तर विद्वान् थिए । उनी पनि त्यसै ठाउँमा थिए जहाँ कृष्ण थिए किनकि यी दुवै सांदीपनका शिष्य थिए ।

लुगाको माध्यमबाट गुरुत्वलाई आँक्न सकिन्न । हामीले लुगालाई पुज्न थाल्यौं, गुरुत्वलाई बिर्स्यौं । पाँच सय वर्ष अघिदेखि यस्तो न्यूनता हामीमा आयो । हामीले त केवल कपडालाई मात्रै आदर गर्न सिक्यौं । कसैले गेरु वस्त्र लाएको देखेमा हाम्रा हातहरू तुरुन्तै जोडिन पुग्छन्, हाम्रो शिर तल झुक्छ र हामी हत्तपत्त उसलाई पैसा चढाउँछौं ।

यदि विद्वान् नै भए पनि गरीब गुरु भएमा हामी पैसा पनि कम नै चढाउँछौं किनकि हामीले गुरुत्वको मूल्याङ्कन गर्न बिर्सिसकेका छौं । हामीमा गुरु, सद्गुरु, छली, पाखण्डीलाई चिन्ने क्षमता हुनु आवश्यक छ, यति त अन्तर्दृष्टि हुनै पर्दछ । यो अन्तर्दृष्टि साधना वा दीक्षाको माध्यमबाट प्राप्त हुन्छ । यस अन्तर्दृष्टिबाट सक्कली र नक्कली छुट्याउन सक्ने हुन्छौं ।

जन्माष्टमीदेखि लिएर नवरात्रि र त्यसभन्दा पछि दीपावलीसम्मका दिन आफैमा बेजोड हुन्छन् । तपाईं यसको महत्त्व बुझ्न सक्नुहुन्न । ती साधनाहरूको महत्त्व पनि बुझ्न सक्नुहुन्न जुन म तपाईंलाई बताउन चाहन्छु । यी दिनहरूमा लक्ष्मी, दुर्गा वा अन्य देवीहरूको साधना गरिन्छ भने त्यो विशेष फलीभूत हुन्छ । साधनाहरूमा लगाइएको समय र परिश्रमको महत्त्व तपाईं बुझ्न सक्नुहुन्न । तर तपाईंले गर्नुभएको साधनाको दुई महिनापछि त्यो सानो साधना हजारौंहजार गुणा फल लिएर तपाईं सामु आउँछ– आर्थिक रूपमा वा अन्य कुनै रूपमा । तब त्यसको वास्तविक महत्त्व बुझ्नुहुन्छ । यदि तपाईंले साधना गर्न पाउनु भएन भने तपाईंलाई महसुस हुनेछ कि तपाईं वञ्चित हुनुभयो त्यस ज्ञानबाट, त्यस साधनाबाट, त्यस दीक्षाबाट ।

आज थाहा नभए पनि पछि तपाईंलाई यसको महत्त्व थाहा हुनेछ । तपाईंलाई महत्त्वको बारेमा थाहा नभए पनि मलाई भने थाहा छ । मैले दिएका साधनाहरू प्रामाणिक र श्रेष्ठतम् साधना हुन् किनकि मैले स्वयं अनुभव गरेपछि मात्रै कुनै पनि साधना तपाईंलाई दिने गर्छु । म तपाईंको समयलाई बरवाद गर्न चाहन्न । तपाईंको एक पैसा पनि व्यर्थ जान दिन चाहन्न । पैसाको सही प्रयोग हुनुपर्छ भन्ने मान्यता मेरो हो ।

मैले दिएको महालक्ष्मी साधनालाई आफै सम्पन्न गरेर हेर्नुहोस् । जब तपाईं धनवान् बन्नुहुन्छ तब तपाईंको अनुहारमा छाएको प्रसन्नता देखेर मेरो अनुहारमा पनि प्रसन्नता छाउनेछ किनकि तपाईं मेरो शिष्य हुनुहुन्छ र म तपाईंकै अङ्ग हुँ, प्राण हुँ, चेतना हुँ, धड्कन हुँ । बिना शिष्य गुरु शब्द बन्नै सक्दैन ।

म त भन्छु कि साधनालाई तपाईंले स्वयं अनुभव गर्नुहोस्, यसलाई विज्ञानको तराजुमा तौलनुहोस् । मैले च्यालेन्जका साथ भनिरहेको छु कि तपाईं आज साधना गर्नुहुन्छ, चार महिनापछि अनुभव गर्नुहुन्छ । मलाई बताउनुहोस् त्यो अनुभव– कि त तपाईं जस्तातस्तै रहनुहुन्छ, कि त तल खस्नुहुनेछ कि त अघि बढ्नुहुनेछ । यी तीन अवस्थामध्ये एउटा अवस्था त निश्चय नै आउँछ । तर तपाईं साधना गरेर अघि बढिरहनु भएको छ भने तपाईं सही गुरुसमीप पुग्नु भएको माने हुन्छ । अँ, मभन्दा पनि ठूला विद्वान् छन् र हुनेछन्, योग्य गुरु हुनेछन् । तर मैले जुन ज्ञान दिइरहेको छु, त्यो पूर्ण ग्यारेन्टीका साथ दिइरहेको छु ।

हाम्रो जीवनमा लक्ष्मी होऊन्, साथै जीवनमा बाधा नरहोस्, शत्रु नरहोस्, कष्ट नरहोस्, चिन्ता नरहोस्, भयमुक्त जीवन बनोस् । यो जीवनको श्रेष्ठतम् साधना हो, अद्वितीय साधना हो ।

शास्त्रले भनेका छन् कि जसले महालक्ष्मी साधनाका साथ बगलामुखी साधना गर्छ, उसले जीवनमा सबै प्राप्त गर्छ किनकि बगलामुखीसमान् कुनै साधना छैन । बगलामुखी साधना बिना जीवनमा निर्भयता आउन सक्दैन । जीवनमा भय, आशंका, कष्ट, अकाल मृत्यु, राज्यभय, विमारी, अशक्तता, निर्धनता सबैको निवृत्तिका लागि शास्त्रमा बगलामुखी साधना बताइएको छ । मानिसले एकपटक मात्रै भए पनि बगलामुखी साधना गर्छ भने उसको आँखामा त्यो तेज, त्यो चमक आउँछ कि अगाडिको मानिस आँखा जुधाउन डराउँछ । दसहजार मानिसको भीडमा पनि उसले बोल्छ भने मानिसहरू टाउको निहुराएर उभिन्छन्, उसमा राज्यभय व्याप्त हुँदैन, उसलाई अकाल मृत्युले छुँदैन, ऊ जीवनमा दुःखी रहन्न ।

तपाईं जीवनमा पूर्ण महालक्ष्मी साधना सम्पन्न गर्नुहोस् । साथै, बगलामुखी साधना पनि सम्पन्न गर्नुहोस् जसबाट भयमुक्त धन, ऐश्वर्य, सम्पन्नता प्राप्त होऊन् । जीवनमा यी दुवै साधना सद्गुरुबाट प्राप्त गर्न सक्नुहोस् र धनवान् हुनाका साथै निर्भिक पनि हुन सक्नुहोस् । हृदयबाटै म यो आशीर्वाद दिन्छु, कल्याण कामना गर्दछु ।

***–सद्गुरुदेव परमहंस स्वामी श्री निखिलेश्वरनानन्दजी*** ।

# माता महालक्ष्मी र तान्त्रोक्त हवन

सिद्धाश्रम शक्ति केन्द्रले मासिकरूपमा तान्त्रोक्त महालक्ष्मी हवन कार्यक्रम संचालन गर्दै आइरहेको पनि आठ वर्ष नाघिसकेको छ । २०६० साल वैशाखदेखि शुभारम्भ भएको महालक्ष्मी हवन नेपाल अधिराज्यबाट सञ्चालन हुने आध्यात्मिक गतिविधिहरूमा अटुट सञ्चालन भइरहेको विशेष कार्यक्रम हो । माता महालक्ष्मीको कृपा, आशीर्वाद, अनुकम्पाका लागि अचुक मानिने यस हवन माता महालक्ष्मीका भक्त, उपासक, आराधक र जिज्ञासुहरूका लागि सजिलो र भरपर्दो माध्यम बन्न पुगेको छ ।

**महालक्ष्मी हवन र भक्तजन :**

तान्त्रोक्त महालक्ष्मी हवनमा भक्तजन र उपासकहरूको सहभागितालाई दृष्टिगत गर्दा विगतमा सयौँ, सयौँसम्मको जनसहभागिता रहेको देखिन्छ । देशको राजनैतिक अस्थिरता, हडताल, बन्दमा पनि माता महालक्ष्मीको कृपा पाउनका लागि हतार गरेर ओइरिनेहरूलाई हेर्दा कुनै पनि परिस्थितिले माताका भक्त र उपासकहरूलाई उहाँको उपासना, आराधनाबाट पृथक् राख्न सक्दैन भन्ने विश्वास दिलाएको छ । जस्तोसुकै हुरी बतासमा पनि अडिग भएर अगाडि बढ्ने सिद्धाश्रम शक्ति केन्द्र नेपालका साधक साधिका र हितैषीहरूको प्रयास, प्रयत्न र मेहनतबाट हवन कार्यक्रममा भक्तजनले निर्धक्क भएर सहभागिता जनाउन पाइरहनु भएको छ । टाढाटाढाबाट सबै

कामलाई थाँती राखेर माता महालक्ष्मीको कृपा, आशीर्वाद पाउन हवनमा भाग लिनेहरूलाई नियाल्दा पनि आनन्द छाउने गर्छ ।

पहेँलो गुरु चादर ओढेर पङ्क्तिबद्ध भएर हवनमा चरु आहुति गर्दाको क्षण र सस्वर वाचनका साथ 'स्वाहा'को मधुर ध्वनिको कम्पनले वातावरणलाई अझै दिव्य र चैतन्य बनाउँदै गरेको दृश्य ललितपुर स्थित माता महालक्ष्मी मन्दिर परिसरमा प्रत्येक महिनाको पहिलो बुधबार बिहान ८:०० बजे देखिने गर्छ । माता महालक्ष्मीको दिव्य मन्त्रसँगै चरुको स्वाहाले त्यस क्षेत्रको वातावरण त शुद्ध भइरहेको हुन्छ-हुन्छ, सहभागीहरूका कैयौँ इच्छा, आकांक्षा, मनोकामनाहरूको पनि पूर्ति भइरहेको हुन्छ किनकि महालक्ष्मी हवन सबैको मनोकांक्षाहरूको पूर्तिको केन्द्रविन्दु हो । यसै केन्द्रविन्दुको सेरोफेरोमा रहेर धेरैले आफ्ना मनोकामनालाई फलीभूत गरेका कैयौँ उदाहरणहरू छन् । हामीलाई अति गौरव लाग्छ, ती भाग्यमानीहरू देखेर जसले हवनमा भाग लिएर

आकाश तत्त्वयुक्त मानिन्छ। मन्त्र विभिन्न वर्णहरूबाट निर्मित हुन्छ र यसको निर्माणबाट जुन तरङ्गहरू बन्छन्, ती तरङ्गहरूको माध्यमबाट साधक एउटा विशेष अवस्थामा पुग्दछ। मन्त्रहरूको तरङ्गले साधकको भित्री चेतना केन्द्रहरूमा प्रभाव पार्दछ। ध्वनिहरूको अर्थात् मन्त्रको बारम्बारको पुनरावृत्ति अर्थात् जपबाट जुन परिणाम प्राप्त हुन्छ, त्यसबाट साधकभित्र एउटा अनुभूति जागृत हुन्छ। मन्त्रबाट पूरै व्यक्तित्वको रूपान्तरण सम्भव छ। संस्कारहरूको समापन पनि सम्भव छ। मन्त्रबाट चेतनाको परिष्कार हुन्छ किनकि यसै वैज्ञानिक प्रक्रियाका कारण तरङ्ग उत्पन्न हुने गर्दछ। अटुट तरङ्गहरूको प्रभावबाट साधकभित्र एउटा चक्र जागृत हुन्छ।

**बीज मन्त्र–** यो विशिष्ट भाव प्रकट गर्नका लागि हुन्छ। मन्त्रयोग संहितामा ८ प्रकारका बीज

माता महालक्ष्मीको कृपा, आशीर्वाद पाउनुभयो। हामीलाई ठूलो आशा र विश्वास छ ती भक्तहरूप्रति पनि जसले प्रत्येक हवनमा भाग लिनुहुन्छ। निश्चय नै एकदिन आफ्ना इच्छा, आकांक्षाहरूको पूर्ति गरेर उहाँहरू धन्य हुनेछन्।

**हवन, मन्त्र र बीजाक्षर :**

तन्त्र साधनामा मन्त्रबिना सफलता प्राप्त हुन सक्दैन। मन्त्रको निर्माण वर्णको संगठनबाट हुन्छ। वर्णको अर्को नाम नै अक्षर हो। वर्ण मूलरूपमा एउटा ध्वनि हो र ध्वनिलाई

## हवन एक श्रेष्ठ कर्म

हवनको फल प्रत्यक्ष र परोक्ष दुवै रुपबाट प्राप्त हुन्छ । हवनको फल साधकलाई यस संसार र मृत्युपछि पनि प्राप्त हुन्छ । हवन अनिवार्य कर्म हो । वैदिक होस् वा तान्त्रिक हवन हरेकमा अनिवार्य छ ।

होम अर्थात् हवन गर्ने बेलामा जुन देवीदेवताको लागि आहुति दिइन्छ, त्यस देवी अथवा देवताको ध्यान गर्नु आवश्यक हुन्छ । अन्यथा हवन व्यर्थ हुन्छ। हवन गर्ने बेलामा कुरा गर्नाले हवनकर्ताको यशलाई अग्निदेवले हरण गुर्नहुन्छ। यसबाहेक हवन गर्दा मनलाई एकाग्र र स्थिर राख्नु पनि आवश्यक छ। हवन कुण्डबाट निस्कने धुवां वायुमण्डलमा पर्यावरणका सबै दोषलाई हटाउन सहायक हुन्छ । यो प्रत्यक्ष फल हो । गीतामा त हवनलाई यज्ञ मानेको छ र यसबाट सृष्टि रक्षणमा ठूलो बल प्राप्त हुन्छ भनिएको छ।

हाम्रो मन जति उदार हुन्छ त्यति नै हवन पनि सफल हुन्छ । मनलाई क्षुद्र राख्नाले कष्ट पाइन्छ । मनलाई उदात्त राख्नका लागि हवन र प्रभु तथा गुरुमा पूर्ण आस्था हुनुपर्छ । हवनबाट नै हामी धर्मवान्, निष्ठावान् र वास्तविक रुपमा मानव बन्न सक्छौं ।

मन्त्र बताइएको पाइन्छ–

**गुरु बीजं शक्ति बीजं रमा बीजं ततो भवेत् ।**

**काम बीजं योग बीजं तेजो बीजमथापरम् ।**

**शक्ति बीजं च रक्षां प्रोक्ता चैषां प्रधानता ॥**

गुरु बीजं– ऐं, शक्ति बीजं– क्रीं, रमा बीजं– श्रीं । काम बीजं– क्लीं, योग बीजं– क्रीं, तेजो बीजं– ह्रीं । शक्ति बीजं– स्त्रीं, रक्षा बीजं– ह्लीं ।

**श्रीं**

श–महालक्ष्मी, र–धन, ऐश्वर्य, ई–तुष्टि, अनुस्वार–दु:खहरण, अर्थ : धन, ऐश्वर्य, सम्पत्ति, तुष्टि-पुष्टिकी अधिष्ठात्री देवी लक्ष्मी मेरा दु:खहरूलाई नाश गर्नुहोस् ।

**महालक्ष्मी हवन र क्रोध** :

महालक्ष्मी हवनमा सहभागीहरूलाई उक्त दिन रिसाउन नपाउने नियम रहेको छ। दिनभरि रिसाउन नपाउने नियम कतिपयलाई अप्ठ्यारो लाग्ने पनि गर्दछ । कतिपय भक्तजनहरू रिसाहा प्रकृतिका हुने भएकाले पनि यो नियम अलि असम्भव जस्तो लाग्ने गरेको पो हो कि ? तर माताका संकल्पप्रवीन र दृढ उपासकहरूका लागि यो नियम खासै गाह्रो भने छैन । यस्ता उपासकहरूको भनाइमा यस नियमले आफूलाई हदैसम्मको संयमित र सचेत बनाएको छ । यही सचेतता र संयम नै आफूहरूका लागि 'गहिरो ध्यान' हुने गरेको धारणा पनि उपासक आराधकहरूको रहेको छ ।

आफूलाई संयमित गर्न नसक्नेहरूका लागि भने यो जटिल विषय भएता पनि आत्मसंयम र कठोर अनुशासनमा बसेर यसलाई पालन गर्न सकिने पनि उपासकहरूको विश्वास रहेको छ । दिनभरि नरिसाइकन बस्दा माता महालक्ष्मीको कृपाबाट वञ्चित हुनु पर्दैन भने को पो रिसाएर आफ्नो हानि आफै गर्लान् ?

जय गुरुदेव !

## क्रोध अति खतरनाक

काम, क्रोध, लोभ, मोह, अहंकार यी सब विकार आत्मानन्दरुपी धनलाई हरण गर्ने हुन् । यी सबैमा क्रोध अधिक हानी गर्ने विकृति हो। आफ्नो अन्त:करणमा यदि लोभ, मोहरुपी विकृति छिरेमा अलिकति मात्रै पुण्य खेर जान्छ । तर क्रोधरुपी अग्नि अन्त:करणमा छिरेमा जप, तप, पुण्यरुपी सबै धनलाई भस्म पार्छ । अत: क्रोधबाट बच्न सक्नुपर्छ । एक महिनासम्मको जप, तपबाट जति चित्त शुद्ध हुन्छ, त्यसलाई एकपटकको क्रोधले नष्ट गर्छ । क्रोधको प्रत्येक वेग आयुलाई घटाउने हुन्छ । क्रोधबाट रगतमा विषको संचार हुन्छ ।

क्रोधले नैराश्यता ल्याउँछ, यसले मानिसको निर्णय गर्ने क्षमतालाई प्रभाव पार्छ । क्रोधमा विरामीमा पनि असोचनीय शक्ति देखिने गर्छ । तर क्रोध समाप्त भएपछि मानिस अति नै शिथिल अवस्थामा पुग्छ । क्रोधले असीमित शक्ति खेर जान्छ, यसबाट समस्त स्नायु प्रणाली प्रभावित हुन्छ । क्रोध आउँदा मानिसको आँखा राता हुन्छन्, शरीर काँप्छ । क्रोधमा मानिसले के गर्दैछु भन्ने कुरा स्वयंलाई थाहा हुँदैन । यसबाट मित्रता टुट्न सक्छ, सम्बन्धमा चिसोपना आउँछ।

हृदय रोग, स्नायु रोग आदि क्रोधबाट उत्पन्न हुन्छन् भन्ने आधुनिक शोधले पुष्टि गरेको छ । एकपटक क्रोधमा आएपछि हुन जाने स्नायु प्रणालीको आघात सन्तुलनमा आउन महिनौँ पनि लाग्न सक्छ ।

# धर्म–संस्कृतिको बलियो जग हो

# तिहार

चाडपर्वको ऐतिहासिक धरातल खोज्नु पर्दा प्राचीनकालको परिवेश नखोजी हुन्न । तिहारको सम्बन्धमा पनि यो नियम लागु हुन्छ । भगवान् विष्णुको त्रिविक्रम नाम र उहाँको तीन पाउले तीन लोक ढाकेको कथासँग बलि राजाको दानमाहात्म्य जोडिएको कथा पुराणहरूमा पाइन्छन् । भगवान् विष्णुसँग सम्बन्धित यस कथाको प्रसङ्ग ऋग्वेदसंहितामा पनि पाइन्छ । सम्भवत: तिहार पर्व वैदिककालदेखिकै हुनुपर्छ ।

असुरराज बलिले तीनै लोकको राज्य गरेको बेला उनले एउटा यज्ञ गरे । जसले जे मागे पनि दिने संकल्प लिएर बसेका बलि राजा कहाँ काश्यपका कान्छा छोरा इन्द्रका भाइ भएर जन्मेका बटु वामनले मौकाको फाइदा उठाउँदै तीन पाउ जमीन

मागे । प्रतीज्ञाअनुसार तीन पाउ जमीन पाइने भएपछि वामनरूप श्रीविष्णुले एउटा पाउले स्वर्ग र अन्तरिक्ष, अर्कोले पृथ्वी ढाकिदिनु भएको र एक पाउ राख्ने जमीनको अभाव भएकोले बलिले आफ्नो शिरमा टेक्न लगाए । बलिको संकल्पप्रवीणतामा खुशी भएर श्रीविष्णुले बलिलाई सुतल नाउँको लोकको राजा बनाउनुभयो । बलिलाई दिएको वरदानस्वरूप चार महिनासम्म भगवान् विष्णु सुतलमा बस्नुपर्ने भयो । भगवान् विष्णुले आषाढ शुक्ल एकादशीदेखि कार्तिक शुक्ल एकादशीसम्म बलिको पाले घरमा गएर सुत्ने तथा कार्तिक कृष्ण पक्षका अन्तिम पाँच दिन बलि राजालाई तीनै लोकको राज्य भोग गर्ने वरदान दिनुभयो । मानव र दानवले गरेको राज्यभन्दा आफ्नो पाँच दिनको राज्यलाई विशेषरूपमा चिनाउन पाँचै दिन दीपावली गर्ने प्रथा बसालियो । यसबेला घर, आँगन, मठ, मन्दिर, बाटाघाटा झकिझकाउ पार्नु पर्ने भयो । यसो गरेमा भगवती लक्ष्मी खुशी हुने र दीपावलीको उत्सव मनाउनेहरूको घरमा बस्नुपर्ने वरदान पनि बलिले श्रीविष्णुबाट पाए । यति मात्र नभई यस्तो दीपावली गरेको बेलामा यमराज पनि खुशी हुने वरदान पाए बलि राजाले ।

त्यस बेलादेखि नै तिहारका पाँच दिन बलिराजाको राज्य मानिँदै आइएको पाइन्छ । बलि राजाको पाँच दिनको राज्यकालमा इन्द्रादि दश दिक्पालले राज्य छोड्नु पर्ने हुँदा उक्त पाँच दिनमा उनीहरू आ-आफ्ना बहिनीहरूको घरमा जाने निधो भयो । उक्त पाँच दिनमा दाजुले बहिनीलाई पूजा गर्ने, वस्त्राभूषण आदि दिने र बहिनीले पनि दाजुलाई सत्कार गरेर, पूजा गरेर मीठामीठा खानेकुरा खान दिने प्रथा बस्न गयो । यसो गर्दा दाजुभाइको आयु, कीर्ति बढ्ने, धनधान्य बढ्ने भयो । यसै कथाको आधारमा तिहारको यमपञ्चक नाम रहेको र यो पर्वलाई ठूलो पर्वको रूपमा मनाउने चलन चल्यो ।

तिहारको रमाइलोमा अझै रौनक थप्न दीपावली गर्ने, माता लक्ष्मीको पूजा गर्ने, उपासना गर्ने, विभिन्न विधिबाट माता लक्ष्मीलाई मनाउने परम्परा पनि बस्न गयो । आदिम युगमा मुद्राको काम गौमाताले दिने भएकोले त्यतिबेलादेखि नै गाई लक्ष्मीको रूपमा मान्य भइन् भने खेतीपातीका लागि अति नै भरपर्दा सहायकको रूपमा गोरुले पनि कृषकहरूबाट सम्मान पूजा पाउने भए । काग र कुकुरलाई यमदूतका रूपमा मान्न थालियो । तिहारमा यिनीहरूको पनि पूजा शुरु भयो । कुकुर यमराजका सहायक पनि हो । यमराजको पूजा गर्दा उनका अनुचरको पनि पूजा हुन थाल्यो । गाई, काग, कुकुर, लक्ष्मी, गोरु, भैँसी गोवर्धन पर्वत, बलिराजा, धर्मराज र यमुना, दिदी बहिनी र दाजुभाइ तथा स्वयं (ह्म) को पनि पूजा मान्यता गर्ने तिहारले सांस्कृतिक, शास्त्रीय पक्षका साथै लौकिक पक्षलाई झन महत्त्व दिएको पाइन्छ ।

धनकी देवी लक्ष्मी समुद्रकी पुत्री मानिन्छ । रत्नादि प्राप्तिका लागि समुद्र मन्थन भएको प्रसङ्ग पुराणमा पाइन्छ । व्यापारवृद्धि, बाटोको सुरक्षाको निम्ति पनि लक्ष्मीको पूजा गर्ने चलन वैदिककालदेखिनै चलेको मान्न सकिन्छ । इशापूर्व १,५०० वर्ष अघिदेखि नै लक्ष्मीका मूर्तिहरू पश्चिम एशिया र रोममा प्राप्त भएको कुरा पुरातत्त्वविद्हरूले उल्लेख गरेका छन् । अन्य ऐतिहासिक अनुसन्धानबाट पनि लक्ष्मीको मान्यता निकै पुरानो रहेको थाहा हुन्छ ।

वर्षा ऋतुको समाप्ति र शरद्‌को पहिलो हिलो मैलो समाप्त भइसकेको अवस्थापछि आउने कार्तिक महिनाको रमाइलो दिनमा भगवती लक्ष्मीको आराधना गरी वर्षान्तको उत्सव मनाउने र शुक्लपक्षको प्रतिपदादेखि नववर्ष प्रवेश भएको मानी नयाँ वर्षको प्रारम्भमा व्यापारका लागि देश विदेश जाने, समुद्र यात्रा गर्ने, व्यापारका लागि संकलन गरेका रत्न, धन सम्पत्ति, सरसामानको पूजाआजा र नयाँ बहीखाता राख्ने परम्परा चलेको छ । समुद्री किनारमा पर्ने दक्षिण भारत एवं पूर्वी भारतका क्षेत्रमा पनि कार्तिक शुक्ल परेवादेखि नयाँ वर्ष मान्ने चलन चलेको पाइन्छ । समुद्री यात्रामा जाने र पश्चिममा रोमसम्म, पूर्वमा पूर्वी एशियाका देशमा व्यापार गर्न जाने व्यापारीहरू प्रायश: दक्षिण भारतकै हुन्थे । यसकाराण यो चलन दक्षिण भारतमा आज पनि पाइन्छ । दक्षिण र उत्तरको पनि व्यापार हुन्थ्यो । आदानप्रदानमा समता ल्याउन उत्तर तथा मध्य भारतका व्यापारी वनियाँ र व्यापारवृत्ति चलाउने अरू जाति पनि आफ्नो बहीखाता स्रेस्ताहरूमा यही कार्तिक शुक्लबाट शुरु हुने नयाँ वर्ष नै मान्दछन् । यस दिन धूमधामसँग अघिल्लो रात उपासना गरी पूजिएकी लक्ष्मीको आह्वान गरी बहीखाता पूज्ने चलन आज पनि जीवन्त छ ।

पुरातनकालदेखि ग्रह गति गन्न र अन्य कामको लागि पनि ज्योतिषहरूले शक सम्वत्‌लाई मुख्य बनाएका थिए । यो सम्वत् उत्तर भारतमा र नेपालमा पनि चैत्रशुक्ल परेवादेखि शुरु भएको मानिन्थ्यो र उपत्यकाभित्र पनि लिच्छविकालमा यही सम्वत् चलेको थियो ।

यसैलाई आधार बनाएर अरू सम्वत् पनि चलेका थिए । पछिल्ला लिच्छविकालमा शक सम्वत् ८०० हुँदा त्यसपछि आठ सय एक, आठ सय दुई गर्दै एक शदीसम्म नै आठबाट गणना गर्नुपर्ने भएको र आठको अङ्क अशुभ सूचक भनी समाजले मान्ने गरेकोले शक सम्वत् ८०१ देखि नेपालमा एक दुई गरी नयाँ सम्वत् गन्ने चलन चल्यो । यस सम्वत्‌लाई पहिले पशुपतिभट्टारक सम्वत् भन्ने र शङ्खधर सम्वत् भन्ने गरेको पाइन्छ भने मल्लकालमा यस सम्वत्‌लाई नेपाल सम्वत्‌को नाउँले चलनमा ल्याएको पाइन्छ । साथै गणितमा चैत्रादि शक सम्वत् मानेता पनि नेपाल सम्वत्‌लाई भने कार्तिक शुक्ल परेवादेखि मान्ने गरिन्छ । यो किन भयो भन्ने कुरा खोजीकै विषय भए पनि नेपाल सम्वत्‌ले नेपालको स्वतन्त्र राष्ट्रको परिचय दिने आफ्नो सम्वत् भएकोले यसको राष्ट्रिय एवं सांस्कृतिक महत्त्वलाई बिर्सन भने सकिँदैन । अत: नेपाल सम्वत्‌लाई उपत्यकाभित्रको मात्रै नबनाई नेपालव्यापी बनाउन सके यसको सांस्कृतिक महत्त्व अझ बढ्नेमा दुईमत हुन सक्दैन ।

**तिहारको महत्त्व** :

कुनै पनि सांस्कृतिक चाडपर्वमा विभिन्न लौकिक र शास्त्रीय कामकुराहरू जोडिदै जान्छन् जसमा मनोरञ्जनको पनि भूमिका रहन्छ । जताततै फूल फुलेर रमझम भएको, फलहरू पनि पुष्ट भएर आफ्नो तरुण अवस्थाको लाली र रसले पूर्ण देखिने तथा खेतमा सुनौला धानका बाला झुलेको बहार, बारीमा पहेँलपुर तोरी फुलेको रमाइलो अवस्थामा आउने पर्व तिहारको आफ्नै महत्त्व छ । मन प्रफुल्ल भएपछि रमाइलो गर्न मन लाग्छ । मीठो खानु, राम्रो लाउनु, मोजमज्जा गर्नु नै चाडको महत्त्व भएकोले तिहारमा नाना थरिका रोटी पकाई खाने, जूवा खेल्ने, नाचगान गर्ने र देउसी खेल्ने गरिन्छ । समाजले नरुचाउने काम, खानु, पिउनु, वेश्यागमन, जूवा खेल्नु, घरघर गएर माग्नु, नाच्नु, गाउनु गरेर हँसाउनु आदि काम गर्न यो पाँच दिनलाई शास्त्रले पनि छूट दिएको छ । जूवा वैदिककालभन्दा पनि पहिलेदेखि नै चलेको खेल हो भन्ने कुरा ऋग्वेदको

एउटा सूक्तबाट थाहा हुन्छ । उक्त सूक्तबाट जूवा खेल्ने लत खराब हो, त्यसबाट जहान छोराछोरीबाट अपमान पाइन्छ । तर खेलेको देखेपछि खेलौं खेलौं लाग्ने, खेल्दा सम्पत्ति स्वाहा हुने भएकोले रुनुपर्ने हुन्छ भन्ने कुराको अभिव्यक्ति उक्त सूक्तबाट पाइने भएकोले जूवा खेल्थे तर जूवाडेको समाजमा इज्जत थिएन भन्ने थाहा पाइन्छ ।

पौराणिक कथामा शिव पार्वती, गणेश र कुमारले पनि जूवा खेल्नु भएको थियो । बाघाम्बर, कमण्डलु, साँढे र लंगौटी समेत पार्वतीले मारेकोले बेहाल भएर नाङ्गै भौंतारिनु भएका शिवको रोचक कथाले पनि तिहारमा जुवा खेल्नै पर्ने शास्त्रको सम्मति प्राप्त छ । दीपावलीको रमाइलो हेर्दै आएकी लक्ष्मीले लक्ष्मी पूजापछि ठिटीहरूसँग जूवा खेल्दा लंगौटी पनि हारेर विचल्ली परेको व्यक्तिलाई देखी धनधान्यपूर्ण बनाइदिएको कथा पनि पुराणसंहितामा पढ्न पाइन्छ । यसरी मनोमानी गर्न छुट भएको पर्व तिहार नेपाल र भारतमा पनि सर्वत्र मनाइन्छन् । त्रयोदशीका दिन कागलाई पूजा गरी भोजन दिने, चतुर्दशीका दिन कुकुर पूजा गरी भोजन दिने र औंसीका दिन गाईको पूजा गरी मीठो राम्रो खान दिने र साँझमा भगवती लक्ष्मीको धुमधामसँग पूजा गरी दीपावली गरिने यो पर्व भारत र नेपालमा उस्तै प्रकारले मानिन्छ । सांस्केतिक परम्पराबाट आएकोले कानूनी निषेध भए पनि, घर घरमा जूवा खेल्ने खेलाउने गरिन्छ ।

तराईतिर बलिराजको चित्र लेखेर पूजा गर्ने चलन कहींकहीं पाइन्छ भने, पहाडतिर बलिराजको प्रतिमा थापेर वा सुपारी नरिवल स्थापना गरी पूजा गर्छन् । साथै, गाईको गोबरको पहाड बनाई गोवर्धनको पूजा गर्ने चलन पहाड र तराईमा पनि छ । बलिराजा र गोवर्धन पूजा कार्तिक शुल्क परेवा, जसलाई गोरु तिहार भनिन्छ, त्यस दिन पर्छन् । यसदिन गोरु बाच्छाको पूजा गरी नून, पीठो, रोटी आदि पक्वान्न पनि खान दिइन्छ । सनपातका रङ्गीचङ्गी डोरी बाटी दाम्ला नाथ (नाकमा लाउने डोरी) गलेंसी (घाँटीमा बाँध्ने छोटो मोटो डोरी) ले सजाई विभिन्न रङ्गले गोरुलाई छाप लगाई बुट्टा भरी चरन पोखरीमा निकाल्ने, बलिया गोरुहरू जुधाएर हारजीतको रमाइलो गर्ने प्रथा तराईवासी कृषकहरूमा चलेको पाइन्छ । दास प्रथा जीवित छँदा खेतीपातीको काम गर्ने दासहरू पनि गोरुसँगै पुजिन्थे । नयाँ कपडा मीठो खाना पाउँथे । आजभोलि त्यस दिनलाई प्राय: हलीतिहार भन्ने र वर्षामा हलो जोतेर खेती लगाइदिने हलीलाई बोलाई मानभाउ गरी मीठो खान दिने चलन गाउँघरमा चलेकै छ ।

उपत्यकाभित्रका नेवारजातिमा 'ह्म' पूजाको नाउँले गरिने स्वपूजा वा आत्मपूजा पनि यसै दिन गरिन्छ जसमा हिन्दू दर्शनका दार्शनिकता लुकेको पाइन्छ । 'म' भनेको आत्मा अर्थात् ईश्वर हो भन्ने दार्शनिक विचारलाई मान्ने हो भने 'ह्म' पूजा भनेर आफूले आफैलाई पूजा गर्नु पनि विशिष्ट पक्ष हो । यो नेपाल उपत्यकाबासीको आफ्नो सांस्कृतिक महत्त्व दर्शाउने पक्ष पनि हो । भैलो र देउसी खेल्ने पनि नेपाली जातिको विशेष सांस्कृतिक पक्ष हो । लक्ष्मीको रूपमा परापूर्वदेखि पूजित गाईको बिहान पूजा गरी साँझमा दीपावलीले

सजधज गरी लक्ष्मीको आवाहन र पूजा गरेपछि गाउँ घरका तरुणी तथा केटाकेटी जम्मा भएर मीठो स्वरमा 'गाईतिहार भैलो' भनेर गाउँदै घर घरमा माग्दै हिँड्छन् । जूवा खेलेर होस्, मागेर होस्, नाचगान गरी रमाइलो देखाएर भए पनि लक्ष्मी जम्मा गर्ने उद्देश्य भएकोले यी सबै कर्म तिहारमा गरिन्छन् । भैलो शब्द भेलावाचक पनि हुन सक्छ र आज गाईतिहार हो भन्ने पर्वसूचक पनि । 'हामी त्यसै आएनौ बलिराजाले पठाए' भनेर भैलो खेल बलिराजका यी पाँच दिनमध्ये पनि कुनै कुनै शास्त्रीय कथनमा औँसीदेखि तीन दिनको महत्त्व बढी बताएकोले भैलो खेल औँसीका दिन शुरु गरिन्छ । भोलिपल्टदेखि देउसी खेल्ने चलन छ ।

**देउसीको तात्विक अर्थ** :

राजा बलिले विष्णुलाई शिर नै दिएका थिए आजको दिनमा । त्यस्तै तिमी पनि हामी माग्नेलाई बलिले जस्तै शिर पनि दिन सक्छौ भन्ने अर्थमा यो शब्द चलेको बुझिन्छ । शिर समर्पण गर्ने बलिले श्रीविष्णुबाट जति वरदान र ऐश्वर्य पाएका थिए, त्यस्तै तिमी पनि दान गरेर आशीर्वाद थाप भन्ने देउसीको कथन छ र रोटी, चामल, पैसा दिएपछि आँगनमा घुमी घुमी विष्णुरूप अतिथि बनेर माग्न आउने देउसीहरूले आशीर्वाद दिन्छन् । कुन ठूलो कुन सानू नभनेर सबै माग्न जाने र गरीब धनी सबैले दिनैपर्ने यो रमाइलो पर्वलाई हामी तिहार भन्छौँ । छिमेकी भारतमा दिवाली वा त्यौहार (चाड) भन्छन् । तर उता देउसी र भैलो खेलिँदैन । मारुनी ड्यौडा झ्याउरेनृत्य खेलेर पनि यस पर्वमा मागिन्छ । असुर राजा बलि भौतिक तत्त्वप्रति आस्था राख्छन् जसको उद्देश्य जसरी पनि कमाऊ, मोज गर, रमाइलो गर भन्ने हो । भौतिक सुख सुविधाको उपभोग गरी रमाइलो गर्दा यमराजले पनि छाडिदिनु पर्छ ।

भोलिपल्ट द्वितीयाको दिन दाजुभाइलाई दिदी-बहिनीले सत्कार गरी पूजा गर्ने र दाजुभाइले दिदी-बहिनीलाई वस्त्र आभूषण दिने गर्छन् । धर्मराजको वरदानले गर्दा भाइको सत्कार गर्ने दिदी-बहिनीको ऐभाँत वृद्धि हुन्छ भने दाजुभाइ दीर्घजीवी हुन्छन् । दिदी-बहिनीकै घरमा खानुपर्ने र भेटघाट हुने यो पर्वको लौकिक महत्त्व पनि बेग्लै मान्नुपर्छ । हिन्दू जातिका अरू चाडवाडमा देवीदेवताको पूजा उपासना मात्र हुन्छ र खुशीयाली मनाइन्छ । तिहारमा काग, कुकुर, गाई, गोरु र दिदी-बहिनी, दाजुभाइको पूजा हुन्छ । यो चाड समस्त जातिहरूको भए पनि 'मह्' पूजाको परम्परा र देउसी भैलोको अनिवार्यताले गर्दा नेपालको सांस्कृतिक पक्षले भने विशेष स्थान राख्दछ । जसमा शास्त्रीय र लौकिक दुवै पक्षको समन्वय र महत्त्व रहेको छ ।

*(स्रोत : नेपाली सांस्कृतिक जात्रापर्व, कुलचन्द्र कोइराला)*

# सूचना

सिद्धाश्रम शक्ति केन्द्रका तत्कालीन सा.प. एवं संयोजक श्री शिशिर सापकोटाज्यू गत वर्षदेखि भारततर्फ प्रस्थान गर्नु भई गुरु प्रेम आश्रम स्थापना गरी बस्नुभएको र सिद्धाश्रम शक्ति केन्द्रको कुनै पनि पदमा नरहनुभएको व्यहोरा उहाँबाट समेत पटक पटक व्यक्त भइसकेको छ । अतः संस्थागतरुपमा उहाँ सिद्धाश्रम शक्ति केन्द्रमा आबद्ध नरहेको हुँदा सोही अनुसार गर्न गराउन सम्बन्धित सबैलाई जानकारी गराउने निर्णय सि.श.के.का सबै समितिका पदाधिकारीहरु सम्मिलित २०६७ आश्विन ९ गते बसुन्धरामा बसेको केन्द्रीय विशेष बैठकबाट पारित भएको हुँदा सोही अनुसार सूचित गरिएको छ ।

# भगवती महालक्ष्मीको प्राकट्य

आध्यात्मिक जगतले धेरै पहिलेदेखि नै शक्तिका प्रमुख स्रोतहरुमा धन, बल र विद्यालाई मानिआएको देखिन्छ । यी तीन विषय मानवजीवनलाई चिनाउने, अघि बढाउने र उठाउने विषयहरु हुन् । यी विषयहरुको अभावमा विश्व निःसहाय हुन्छ भने पनि हुन्छ । यी तीनै तत्त्वलाई संचालन गर्ने महाकाली, महालक्ष्मी र महासरस्वती पर्दछन् । महाकाली बल, शक्तिकी स्रोत हुन् भने महालक्ष्मी धन, सम्पत्ति र रुप शक्तिकी अधिष्ठात्री हुन् । महासरस्वती ज्ञान र शक्तिकी मुहान हुन् ।

महालक्ष्मीका विविध रुप छन् । ऐश्वर्यलक्ष्मी, धनलक्ष्मी, वैभवलक्ष्मी, कमला, वसुधा आदि यिनलाई सहस्र नाम दिए पनि सबै लक्ष्मीको श्रीविग्रह सनातन वैकुण्ठाधिपति विष्णुकै शक्तिका रुपमा चिनिन्छन् । यिनै महालक्ष्मी कसरी प्रकट भइन् भन्ने कुरा विभिन्न ग्रन्थहरुमा यसप्रकार उल्लेख भएको पाइन्छ–

प्राचीन समयको कुरा हो । सृष्टिको आदिकालमा परब्रह्म भगवान् श्रीकृष्णको बायाँ अङ्गको रास मण्डलमा भगवती राधा प्रकट हुनुभयो र राधाको बायाँ अंशबाट श्री लक्ष्मीजीको प्रादुर्भाव भयो किनकि भगवान् श्रीकृष्णको दाहिने अंशमा राधाजी स्वयं विराजमान् हुनुहुन्थ्यो । जब राधाले भगवान् श्रीकृष्णलाई आफ्नो पतिको रुपमा स्वीकार गर्नुभयो, लक्ष्मीजीलाई पनि श्रीकृष्णलाई नै पतिको रुपमा वरण गर्ने इच्छा जाग्यो । यस्तो परिस्थितिमा भगवान् श्रीकृष्ण उहाँलाई गौरव प्रदान गर्न स्वयं दुई रुपमा प्रकट हुनुभयो । आफ्नो दायाँ अङ्गबाट दुई हात भएको (दुई भुजाधारी) श्रीकृष्ण र वाम (बायाँ) अंशबाट चुतुर्भुज विष्णुको रुपमा श्रीकृष्ण स्वयं प्रकट हुनुभयो ।

**देवताहरुद्वारा महालक्ष्मीको पूजन**

सर्वप्रथम भगवान् विष्णुले नै वैकुण्ठधाममा महालक्ष्मीको पूजा एवं अर्चना गर्नुभयो । त्यसपछि चतुर्भुज ब्रह्माजी र शिवले विधिवत् आराधना गर्नुभयो । पुनः भगवान् विष्णुले क्षीर सागरमा उहाँको पूजा गर्नुभयो । त्यसपछि मनु, मनवेन्द्र, ऋषिश्वर, मुनिश्वर, साधु र गृहस्थहरुबाट महालक्ष्मीको उपासना भयो ।

भाद्र महिनाको शुक्लपक्षको अष्टमीका दिन महालक्ष्मीको पूजा स्वयं ब्रह्माजीले

*मन्दराचल पर्वतलाई काष्ठ, कच्छपलाई पात्र र शेषनागलाई डोरी बनाएर देव-दानव मिलेर क्षीर सागरलाई मन्थन गरे । यसबाट धन्वन्तरि वैद्य, अमृत, उच्चैश्रवा, अश्वरत्न, ऐरावत हात्ती, सुदर्शन चक्र, कालकूट विष र लक्ष्मीजीको प्रादुर्भाव भयो ।*

*जीवनको चाहे आर्थिक पक्ष होस् वा अन्य कुनै पक्ष, त्यसमा पूर्ण सफलता प्राप्त गर्न मेहनत, परिश्रमका साथसाथै माता महालक्ष्मीको कृपा, अनुकम्पा पनि उत्तिकै जरुरी छ ।*

गर्नुभयो । त्यसैले भाद्र महिनाको पुरै शुक्ल पक्षभरि नै तीनै लोकमा उहाँको पूजा-अर्चना हुन थाल्यो ।

चैत्र, पौष र भाद्र महिनाको मङ्गलबार भगवान् हरिले भक्ति एवं श्रद्धापूर्वक तीनै लोकमा उहाँको पूजाको प्रचारप्रसार गर्नुभएको थियो ।

पौष महिनाको सङ्क्रान्तिका दिन मनुले आफ्नो प्रांगणमा उहाँको प्रतिमाको आवाहन गरी पूजा गरेकाले यही पूजा पछि प्रचलित हुन गयो । मङ्गल, केदार, नल, इन्द्र, बलि, मनु, सूर्य, चन्द्र, वायु, यम, अग्नि र वरुणले लक्ष्मीजीको आराधना गरे । यसप्रकार भगवती महालक्ष्मी सर्वत्र, समस्त ऐश्वर्यका अधिष्ठात्री देवी हुनुहुन्छ । समस्त सम्पत्तिका स्वरुप हुनुहुन्छ ।

### ऋषि दुर्वासाको श्राप

महर्षि दुर्वासाको श्रापबाट इन्द्र र देवगण तथा मर्त्यलोक लक्ष्मीबाट हीन भए । लक्ष्मीजी रिसाएर स्वर्ग त्यागी वैकुण्ठ गएर विलीन हुनुभयो । जसको कारण सम्पूर्ण देवगणहरुले दुःखले, शोकले विह्वल भएर ब्रह्माजीलाई अगाडि लगाई वैकुण्ठधाम गएर अत्यन्त दीन भावले आराधना गरे । तब भगवान् विष्णुको आज्ञा प्राप्त गरी इन्द्र सम्पत्तिस्वरुपमा लक्ष्मी समुद्रकी कन्या भएर प्रकट हुनुभयो ।

अक्षस्त्रक्प
पद्मं धनुः
शक्तिमरि
घण्टां
शूलं पाश
हस्तैः प्र
सैरिभमर्दि
सरो

**अर्थात्, स्वहस्तकमलमा अक्षमाला, कुण्डिका, शक्ति, खड्ग, चर्म, शङ्ख, घ धारण गर्नुहुने, कमलस्थित, महिषासुरमर्दिन**

रशू गदेषुकुलिशं
कुण्डिकां दण्डं
सिंच चर्म जलजं
सुधाभाजनम् ।
सुदर्शनं च दधतीं
सन्नाननां सेवे
जीमिह महालक्ष्मीं
जस्थिताम् ॥

**परशु, गदा, वाण, वज्र, कमल, धनुष, ण्टा, सुधापात्र, शूल, पाश र सुदर्शनचक्र नी महालक्ष्मीको हामी ध्यान गर्दछौं ।**

## क्षीर सागरबाट लक्ष्मीको प्राकट्य

भगवान् विष्णुले लक्ष्मीलाई भन्नुभयो– 'हे देवी ! तिमी आफ्नो कलाबाट क्षीर सागरबाट उत्पन्न होऊ ।' त्यसपछि उहाँले ब्रह्माजीलाई भन्नुभयो– 'अब समुद्रको मन्थन गराउनुहोस् । लक्ष्मी निःसन्देह प्रकट हुनेछिन् । तब उनलाई देवताहरुमा समर्पित गरिदिनुहोस् ।' यसपछि भगवान् विष्णु अन्तपुरमा जानुभयो । श्रीहरिको आज्ञा प्राप्त गरी समस्त देवताहरु क्षीर सागरमा एकत्रित भए । मन्दराचल पर्वतलाई काष्ठ, कच्छपलाई पात्र र शेषनागलाई डोरी बनाएर देव-दानव मिलेर क्षीर सागरलाई मन्थन गरे । यसबाट धन्वन्तरि वैद्य, अमृत, उच्चैश्रवा, अश्वरत्न, ऐरावत हात्ती, सुदर्शन चक्र, कालकूट विष र लक्ष्मीजीको प्रादुर्भाव भयो ।

भगवान् विष्णुप्रति अपार श्रद्धा राख्ने साध्वी श्रीलक्ष्मीजीले क्षीरसायी भगवान् विष्णुको गलामा माला पहिराइदिनुभयो । देवगणहरुले भगवती लक्ष्मीजीसँग प्रार्थना गरे जसको फलस्वरुप उहाँले देवगणहरुलाई वरदान दिनुभयो । शास्त्रका अनुसार लक्ष्मीजीका चार पुत्रहरुमा कर्दम, आनन्द, श्रीत र चिक्लित हुन् । यी चार पुत्रहरु श्रीसूक्तका ऋषिहरु पनि हुन् ।

जीवनको चाहे आर्थिक पक्ष होस् वा अन्य कुनै पक्ष, त्यसमा पूर्ण सफलता प्राप्त गर्न मेहनत, परिश्रमका साथसाथै माता महालक्ष्मीको कृपा, अनुकम्पा पनि उत्तिकै जरुरी छ । तपाईं हामी पनि माता महालक्ष्मीको कृपा, आशीर्वाद, अनुकम्पा प्राप्त गरी शत्रु नाश, विद्या प्राप्ति, सन्तान प्राप्तिजस्ता विभिन्न लाभ प्राप्त गर्न सक्छौं । जय गुरुदेव ।

*सन्दर्भग्रन्थ :*

१. *लक्ष्मीरहस्यम्, पं. अशोककुमार गौद ।*
२. *हिन्दू समाजमा धर्म, डा गणेशप्रसाद क्षेत्री, सोमप्रसाद खतिवडा ।*

# चाँगुनारायण मन्दिर

**सशङ्खचक्रं सकिरीटकुण्डलं**
**सपीतवस्त्रं सरसीरुहेक्षणम् ।**
**सहारवक्षःस्थलकौस्तुभश्रियं**
**नमामि विष्णुं शिरसा चतुर्भुजम् ॥**

*(चारै हातमा शङ्ख, चक्र, गदा र पद्म समेतका आयुधहरू धारण गर्नुभएका, कानहरू दिव्य किरीटकुण्डल आदि अलङ्कारहरूले विभूषित, पीताम्बरधारी, कमलनयन एवं कौस्तुभमणिले वक्षःस्थल सुशोभित, यस्ता भगवान् विष्णुलाई नमस्कार गर्दछु ।)*

काठमाडौँ उपत्यकाको प्राचीन एवं ऐतिहासिक भक्तपुर जिल्लादेखि ६ किलोमिटर उत्तर समुद्र सतहबाट करी ५,५०० फीटको उचाइमा अवस्थित चाँगुनारायण मन्दिर उपत्यकाको सबैभन्दा पुरानो मन्दिरमा गनिन्छ। काठमाडौँको हनुमानढोकाबाट ३.५ कोश (१७.५ किलोमिटर) टाढा रहेको यस मन्दिर दोलागिरि डाँडा (दोलाद्रि) मा अवस्थित छ। यो मन्दिर चारैतिरबाट पाटी पौवाहरूले घेरेर रहेका छ । ऐतिहासिक एवं कलात्मक प्राकृतिक हरियालीपूर्ण, सुरम्य ठाउँमा रहेको यो मन्दिर परिसर क्षेत्रभित्र विभिन्न देवीदेवताका मूर्तिहरू, शिलालेख तथा ताम्रपत्रहरू छन् । ठूलठूला प्रवेशद्वारहरू मन्दिरको चारैतिर छन् भने यसबाट चारैतिर जाने ढुङ्गाका सिँढीहरू बनाइएका छन् । पाटी र पर्खालबीच पैगोडा शैलीको विशाल, सुन्दर एवं भव्य मन्दिर ठूलो चारपाटे ढुङ्गाको चौतारामाथि निर्माण गरिएको छ। यसका पेटीहरू निकै सुन्दर र फराकिला छन् । यस मन्दिरको चार द्वारमध्ये पश्चिमद्वार मूलद्वार हो । भगवान्को पूजा गर्ने बेलामा यो द्वार खुला राखिन्छ। अन्य समयमा चाहेमा ढोका अगाडिमा पैसा राखेर द्वार खुलाउन सकिने व्यवस्था पनि रहेको छ ।

मन्दिरको मूलद्वार अगाडि एक जोडी सिँहका सुन्दर मूर्तिहरू छन्। द्वारका चौकोस एवं ढोकाहरू स्वर्णमण्डित धातुले मोडिएका छन् । द्वारमाथि भगवान् नारायणको सुन्दर धातुको मूर्ति छ र कलात्मक तोरणले गर्दा यसको सजावटमा कुनै कमी भएको देखिन्न । गरुड र लक्ष्मी मूर्तिबीच रहेको नारायणको मूर्ति अति नै सुन्दर, भव्य एवं दिव्य देखिन्छ ।

दुई तल्ले मन्दिरको पहिलो छाना झिँगटीको छ भने मन्दिरको छानामुनिका टुँडालहरूमा भगवान् विष्णुका विभिन्न अवतारका मूर्तिहरू उत्कीर्ण गरी चित्रित

गरिएका छन् । काष्ठकलाका उत्कृष्ट नमूना मानिएका यस्ता मूर्तिहरू अति सुन्दर र भव्य छन् । मन्दिरको छानाका किनारामा स-साना घण्टीहरू झुण्ड्याइका देखिन्छन् । यस मन्दिरको दोस्रो तल्लाको छाना भने सुनको जलप लगाएको धातुको हो । मन्दिरको टुप्पोमा रहेको स्वर्णजडित गजूरले मन्दिरको शोभा बढाइरहेको छ ।

मन्दिरको बाहिर बायाँपट्टि एउटा ठूलो शङ्ख छ भने दायाँतिर चक्र रहेको देखिन्छ । भगवान् विष्णुका अन्य प्रतीकात्मक चिह्नहरू पनि यहाँ देखिन्छन् । यी चिह्नहरूलाई करिब दश फीट उचाइको ढुङ्गाको स्तम्भमा राखिएका छन् । भगवान्को वाहन गरुडको भव्य एवं विशाल मूर्ति ठीक मूलद्वारको अघि रहेको छ । यस मूर्तिमा भक्तहरूले प्रत्येक वर्ष नागपञ्चमीका दिन मिठाई चढाउँछन् । पूजारीले यहाँ तरल पदार्थ संग्रह गर्दछन् जुन कुष्ठरोग र अल्सरका लागि उपयोगी हुन्छ भन्ने विश्वास गरिन्छ । यसैगरी यहाँ यत्रतत्र थुप्रै देवीदेवताका सुन्दर मूर्तिहरू देखिन्छन् । जसमध्ये लक्ष्मीनारायण, किलेश्वर महादेव, नासो भगवान्, छिन्नमस्ता, विश्वरूपालगायत भगवान् शिवका मूर्तिहरू रहेका छन् । यहाँ गरुडको छेउमा नागको मूर्ति पनि देखिन्छ ।

मन्दिरको भित्री गर्भगृहमा गरुडासनमा विराजमान चतुर्बाहु, शङ्ख, चक्र, गदा र पद्मसमेतका आयुधहरू धारण गर्नुभएका भगवान् नारायणको श्यामवर्ण, सुन्दर मूर्ति छ । यहाँ भगवान्को दैनिक पूजा आरती हुने गरिए पनि बुधबारका दिन भने विशेषरूपले विधिवत् पूजा हुन्छ । बुधबारका अतिरिक्त द्वादशी, पूर्णिमा तिथि चाँगुनारायण पूजाका विशिष्ट दिनहरू हुन् । खीरप्रसादको भोग भगवान्का लागि उत्तम मानिन्छ । कार्तिक महिनाको शुक्ल नवमी तिथि (कुष्माण्ड नवमी) मा यहाँ धार्मिक मेला लाग्छ ।

**मन्दिरको मूलद्वार अगाडि रहेको गरुडको मूर्ति**

यसदिन श्रद्धालु भक्तजनहरूको ठूलो भीड लाग्ने गर्छ । नेपालमाहात्म्य, हिमवत्खण्डमा यस दिनमा गरिएको चाँगुनारायणको दर्शनको महिमाका बारेमा उल्लेख भएको पाइन्छ ।

भगवान् नारायणको उत्पत्ति सम्बन्धमा एउटा प्रसिद्ध लाकोक्ति पाइन्छ– परापूर्वकालमा अधिकांश चाँपका रूखहरू भएको वनको एक छेउमा एकजना सुदर्शन नामक तपस्वी ब्राह्मण बस्दथे । अर्को छेउमा गाई गोठालाहरू बस्दथे । तीमध्ये एक गोठालाले ब्राह्मण कहाँ दिनहुँ दूध पुऱ्याउन जान पर्थ्यो । दिनहुँ दूध पुऱ्याउने क्रम धेरै दिन टुट्न गयो । गोठालासँग बुझ्दा गाईले दूध नदिएको थाहा पाएर सुदर्शन आफू पनि गोठालासँगै वनमा गएर लुकी गाईका क्रियाकलापहरू हेर्न थाले । एउटा चाँपको रूखबाट एकजना कालो व्यक्ति (नेपालमाहात्म्यमा सुन्दर पुरुष भनिएको) निस्केर गाईको थुनबाट दूध चुसेको देखेपछि कालो वर्णको भएकोले कुनै भूत ठानेर सुदर्शनले उक्त

किलेश्वर महादेव

व्यक्तिको टाउको काटिदिए । तत्काल उक्त व्यक्ति टाउको नभएको शङ्ख, चक्र, गदा, पद्म हातमा लिएको चार बाहुको भगवान् नारायणको रूपमा प्रकट हुनुभयो । यो रूप देखेर सुदर्शन ब्राह्मण विचलित भए र उनी मर्न तयार भए । भगवान् नारायणले उनलाई रोक्दै भन्नुभयो– 'तिम्रो यसमा केही दोष छैन । एकपटक देवासुर सङ्ग्राममा चण्ड दैत्यको पक्ष लिएर देवतासँग लड्न आएका सुमति ब्राह्मणलाई मैले वध गरेको थिएँ । आफ्नो प्रिय शिष्यको वध भएकोले सुमतिका गुरु (दैत्य गुरु शुक्राचार्य) ले ब्राह्मण हत्याको श्राप दिएर सुमति ब्राह्मणकै कुलमा जन्मने ब्राह्मणले शिरोच्छेदन गरेपछि मेरो श्रापोद्धार हुने बताए । त्यही अनुसार तिमीले मेरो शिर काट्यौ, म श्राप मुक्त भएँ । म यसै ठाउँमा बस्छु, तिमी मेरो पुजारी बन ।' यसरी चाँगुनारायणको उत्पत्तिदेखि नै सुदर्शन ब्राह्मण र उनका सन्तान पुजारी र गोठालाका सन्तान सुसारेको रूपमा रहेर नित्य पूजामा संलग्न हुने परम्परा अद्यापि छ । यहाँका पूजारीले चाहे आफ्नै जन्मदाताको निधनमा पनि जूठो सुतक बार्नु पर्दैन । त्यसैगरी मन्दिरका पालोवाला सुसारे (भँडेल) लाई पनि पुजारीको निवासमा बस्दा जूठो लाग्दैन ।[1]

माथिको प्रसङ्गमा केही पात्र र घटनाक्रमहरू फरकरूपमा जनमानसमा प्रचलित भएको पनि पाइन्छ । सुदर्शन ब्राह्मणले गाई पाल्न नसकेर एकजना ग्वालालाई पाल्न दिए । गाईको दूध आफूले पनि उपयोग गर्ने र ब्राह्मणलाई पनि दिने गर्थे । एकपटक गाईको दूध दुहुँदा नआएपछि ग्वालाले ब्राह्मण कहाँ दूध लान सकेनन् । गाईले किन दूध दिएन भनेर चियो गर्दा एउटा चाँपको रूखको प्वालबाट एकजना बालक आई गाईको सबै दूध खाइरहेको देखे । रूखबाट निस्केर बालकले गाईको दूध खाएको देखेर रूखलाई काट्ने विचार भयो । रूख काट्दै जाँदा त्यसबाट रगत बग्न थाल्यो । रूख दुई टुक्रा भएपछि त झनै रगत बग्यो । यस घटनालाई अति दुःखदायी मानेर पश्चात्ताप गर्दै रहँदा उनीहरूले भगवान् नारायणको चतुर्भुज स्वरूपको दर्शन पाए । भगवान् नारायणले भन्नुभयो– अब म यहीँ बस्छु । प्रायश्चितस्वरूप ब्राह्मणले मेरो नित्य पूजा, अर्चना गर्नू । भगवान् नारायणको बास त्यहाँ भएपछि पूजा चल्दै जाँदा चाँगु डाँडा सधैँ हल्लिन थाल्यो । यसबाट भगवान्ले नरमाइलो मान्न थाल्नुभयो । डाँडालाई हल्लिनबाट रोक्न महादेवको आवाहन गरियो । श्रीमहादेवले किला गाड्नुभयो र डाँडा हल्लिन बन्द भयो । श्रीमहादेवलाई त्यसपछि उहाँका गण भूत, प्रेतले दुःख दिन थाले । श्रीमहादेवले मातृशक्तिलाई आवाहन गर्नुभयो । मातृशक्तिले त्यहाँ आएर हेर्दा

गरुडासनमा श्रीविष्णु

श्रीमहादेवका सबै गणहरू खान नपाएर उहाँलाई दु:ख दिइरहेका थिए । मातृशक्तिले आफ्नो शिरोच्छेदन गरेर गणहरूलाई आफ्नो रगत खान दिनुभयो । मातृशक्ति छिन्नमस्ताको रूपमा त्यहीं बस्नुभयो ।

छिन्नमस्ता मन्दिर

लिच्छविकालका प्रतापी राजाहरूमध्ये मानदेव हुन् । मानदेवको समय अर्थात् पाँचौं शताब्दीतिर यो मन्दिर बनेको हुनुपर्छ । उनले मन्दिर सञ्चालनका लागि यथेष्ट जग्गा-जमीन गुठी राखिदिएका थिए । वि.सं. १७५० तिर कान्तिपुरका राजा जयभूपालेन्द्र मल्लले यस मन्दिरको जीर्णोद्धार गराएका हुन् । पछि पनि मन्दिरको मर्मत सम्भार हुँदै आइरहेको देखिन्छ । राजा रणबहादुर शाहको पालामा वि.सं. १८५० को लालमोहरअनुसार चाँगुनारायण मन्दिरका लागि ६५० रोपनी जग्गा गुठीको व्यवस्था भएको र हालसम्म यसकै आम्दानीबाट मन्दिरको खर्च चलिरहेको छ ।

लिच्छविकालमा चाँगुनारायणको नाम दोलाशिखर स्वामी रहेको थियो भने मल्लकालमा चाँगुनारायणको नामाकरण नेपाल भाषामा आधारित भएको पाइन्छ र चाँगु शब्दका बारेमा खोजी पस्दा नेवारी भाषालाई दृष्टिगत गर्न सकिन्छ । नेवारीमा 'च'को चाँप र 'गुँ'को अर्थ वन भएकाले संस्कृतको 'चम्पक' शब्दको ठाउँमा अपभ्रंश भई 'चाँगु' शब्द बन्यो र यो शब्द नारायणसँग जोडिई 'चाँगुनारायण' हुन गएको हो भन्ने जनश्रुति रहेको छ ।

स्थापत्यकला, काष्ठकला, धातुकला र प्रस्तरकलाको अद्भुत एवं विशिष्ट शैलीको मन्दिर हो यो । नेपालको वास्तुशिल्पको परम्परागत नमूना पनि हो यो । मन्दिरको अतिविशिष्ट कलासौन्दर्यबाट उपत्यकाको तत्कालीन सामाजिक जीवनशैली, समृद्धि, धार्मिक एवं आर्थिक पक्षका बारेमा बग्रेल्ती जान्न बुझ्न सकिन्छ ।

ऐतिहासिक शहर भक्तपुरबाट ट्याक्सी चढेर करीव आधा घण्टामा पुग्न सकिने यस मन्दिरमा जति पटक सकिन्छ, त्यति नै पटक गएर जीवनलाई समुन्नत पार्नुपर्ने कुरा नेपालमाहात्म्य, हिमवत्खण्डको अध्याय ८७ ले यसरी व्यक्त भएको छ–

**मणिमत्यां च यो धीरः स्नात्वा भक्तियुतो मुने ।।**
**दोलाद्रिं च समारुह्य पश्यति गरुडध्वजम् ॥**
**सर्वपापैर्विनिर्मुक्तः परिवारैः समन्वितः ।**
**सूर्यप्रतिमयानस्थो गच्छति वैष्णवं पदम् ॥**

अर्थात्, जुन व्यक्तिले मणिमती, मनोहरामा स्नान गरेर दोलागिरि पर्वतस्थित, गरुडासनमा विराजमान विष्णु भगवान् (चाँगुनारायण) को दर्शन-पूजन गर्छ भने उसको सपरिवार सूर्यसमान् चम्किलो विमानमा चढेर ईश्वरको लोकमा पुगी वैकुण्ठवास हुन्छ ।

**सन्दर्भ सामग्रीः** *१.चम्पक रजत स्मारिका २०६१, चम्पक युवा क्लब, भक्तपुर । अन्य स्रोत : तीर्थपर्यटन, युवराज शर्मा गौतम ।*

# तान्त्रोक्त महालक्ष्मी पूजन

*दीपावली महापूजाको रात्रि हो जुन दिनको ज्योतिले वर्षभरि नै साधकको घर उज्ज्वल भइरहन्छ । यस दिन जुन किसिमको प्रसन्नताको वातावरण बन्छ त्यो सदैव रहिरहोस् र यो दिन जे संकल्प लियो त्यो पूर्ण होस् तथा आराध्य महालक्ष्मीको आवाहन पूर्ण होस् भन्नाको लागि माता महालक्ष्मीको विशेष पूजन गर्नुपर्दछ ।*

*परम्परागतरूपमा आ-आफ्नै तरीका एवं विधि-विधानपूर्वक माता लक्ष्मीको पूजन गर्ने प्रचलन हामीकहाँ पनि रहेको भएता पनि उपयुक्त र प्रामाणिक विधिको अभावमा धेरै मानिसहरू अलमलिइरहेको स्थितिमा तल उल्लिखित विधिअनुसार माता महालक्ष्मीको पूजन गरी लाभ उठाउनुहुन अनुरोध गर्दछौं ।*

*लक्ष्मीपूजाको दिन पूजन गर्नुभन्दा अघि निम्न सामग्रीहरू जम्मा गरौँ–कुंकुम, पञ्चरङ्गी धागो, पान, सुपारी, ल्वाङ, अलैंची, धूप, दीप, फल, गङ्गाजल, नैवेद्य, वस्त्र, आभूषण, अबीर, केसरी, सिन्दूर, बेसार, नरिवल (काँचो), पुष्प (तीन माला), यज्ञोपवीत, पञ्चामृत, माता महालक्ष्मीको प्राण-प्रतिष्ठित चित्र, महालक्ष्मी दिव्य यंत्र, तान्त्रोक्त कमलगट्टा माला ।*

**पूजन विधि–**

दीपावलीको साँझको शुभ मुहूर्तमा स्नानादि गरी शुद्ध, पवित्र भई पूर्व वा उत्तरतर्फ फर्किएर पहेँलो आसनमा बसौँ । यदि सम्भव छ भने आफ्ना परिवारका सदस्यहरूलाई पनि साथै बसाऔं । सामुन्ने एउटा सानो पिर्कामा कपडा ओछ्याएर सादा पूजा थालीमा कुंकुमबाट स्वस्तिकको चिह्न या श्रीं बीज बनाऔं र त्यसमा 'महालक्ष्मी दिव्य यंत्र'लाई स्थापित गरौं, आफ्नो सामुन्ने महालक्ष्मीको चित्र (तस्वीर) पनि स्थापित गरौँ । सबभन्दा पहिला गुरु पूजन गरौँ । संक्षेपमा गणेश पूजन पनि गरौँ र पछि आफ्नो दाहिने हातमा जल लिएर संकल्प गरौँ । संकल्पमा महिना, पक्ष, तिथि, आफ्नो नाम तथा गोत्र उच्चारण गरेर म अखण्ड लक्ष्मी प्राप्तिहेतु लक्ष्मी पूजन सम्पन्न गर्न गइरहेको छु भन्ने भावना राखेर जललाई भुइँमा छोडौं ।

**कलश स्थापना–**

यसपछि आफ्नो दायाँतर्फ कलश स्थापित गरौँ, तलतिर चामलबाट अष्टदल, कमल वा स्वस्तिक बनाएर जलपूर्ण कलश त्यसमा राखौँ। कलशमा सुपारी, अक्षता, दूबो, एक रूपैयाँ तथा चन्दन र पुष्प राखौँ। कलशलाई सवा मिटर रातो वस्त्रले ओढाएर यसको माथि नरिवल राखौँ। पुन: धूप, दीप, नैवेद्य आदिबाट वरुण देवको साधारण पूजन सम्पन्न गरौँ र यसपछि लक्ष्मीको मुख्य पूजन आरम्भ गरौँ।

**ध्यान–**

पद्मासनां पद्मकरां पद्ममाला विभूषिताम्<br>
क्षीर सागर संभूतां हेमवर्ण समप्रभाम्।<br>
क्षीर वर्णं श्वेत वस्त्रं दधानां हरिवल्लभाम्।<br>
भावेयं भक्तियोगेन भार्गवीं कमलां शुभाम्।<br>
ॐ श्री महालक्ष्म्यै नम: ध्यानं समर्पयामि।

**आवाहन–**

सर्वमंगल मांगल्ये विष्णुवक्ष: स्थलालये<br>
आवाहयामि देवि त्वां क्षीर सागर सम्भवे<br>
ॐ महालक्ष्म्यै नम: आवाहनम् समर्पयामि।

**आसन–**

आसनको लागि पुष्प अर्पण गरौँ–<br>
सदा पद्मांक संस्थाने सर्वाधारे महेश्वरि<br>
सर्वतत्त्वमयं दिव्यं आसनं प्रतिगृह्यताम्<br>
ॐ श्री महालक्ष्म्यै नम: पादयो: पाद्यम् समर्पयामि।

**अर्घ्य–**

अघहीनं गृहाणेदम् अर्घ्यम् अष्टांग संयुतम्<br>
अम्बाखिलानां जगतामम्बुजासन वन्दिते।<br>
ॐ श्री महालक्ष्म्यै नम: हस्तयोरर्घ्यं समर्पयामि।

**आचमन–**

सर्वतीर्थ समानीतं सुगन्धिं निर्मलं जलम्।<br>
आचम्यताम् मया दत्तं गृहीत्त्वा परमेश्वरि॥<br>
ॐ श्री महालक्ष्म्यै नम: आचमनीयम् समर्पयामि।

**स्नान–**

गङ्गासरस्वती रेवा पयोष्णि नर्मदा जलै:।<br>
स्नापितासि मया देवि ! तथा शान्तिं कुरुष्व मे॥<br>
ॐ श्री महालक्ष्म्यै नम: स्नानं समर्पयामि।

**पंचामृत स्नान–**

मध्वाज्याशर्करायुक्त दधिषीर समन्वितम्<br>
पंचामृतं गृहाणेदं सर्वशक्तिसमन्विते॥<br>
ॐ श्री महालक्ष्म्यै नम: पंचामृत स्नानं समर्पयामि।

**वस्त्र–**

सर्वभूषादिके सौम्ये लोकलज्जा निवारणे।<br>
मयोपपादिते तुभ्यम् गृह्यताम् जगदम्बिके॥<br>
ॐ श्री महालक्ष्म्यै नम: वस्त्रोपवस्त्रं समर्पयामि।

**यज्ञोपवीत–**

उपवीतं गृहाणेदं उपमाशून्य वैभवे।<br>
उमाहेमवति प्रीत्या हेमसूत्र समन्वितम्॥<br>
ॐ श्री महालक्ष्म्यै नम: यज्ञोपवीतं समर्पयामि।

**आभूषण–**

मांगल्यमणिसंयुक्तं मुक्ताफल समन्वितम्।<br>
दत्तं मंगल सूत्रं ते गृहाणाम्ब ! शुभं कुरु॥<br>
ॐ श्री महालक्ष्म्यै नम: आभूषणं समर्पयामि।

**चन्दन–**

श्रीखण्डचन्दनं दिव्यं गन्धाढ्यं सुमनोहरम्।<br>
विलेपनं सुरश्रेष्ठि चन्दनं प्रतिगृह्यताम्॥<br>
ॐ श्री महालक्ष्म्यै नम: चन्दनं समर्पयामि।

**अक्षत–**

अक्षतान् धवलान् देवि ! शालीयांस्तण्डलान् शुभान्।<br>
हरिद्राकुंकुमोपेतान् गृहाणाम्ब ! कृपानिधे॥<br>
ॐ श्री महालक्ष्म्यै नम: अक्षतान् समर्पयामि।

**पुष्प–**

माल्यादीनि सुगन्धीनि मालत्यादीनि वैविभे।<br>
मयोपनीतानि पुष्पाणि गृहाण जगदम्बिके॥<br>
ॐ श्री महालक्ष्म्यै नम: पुष्पाणि समर्पयामि।

**सौभाग्य द्रव्य–**

कज्जलं चैव सिन्दूरं हरिद्राकुंकुमानि च।<br>
भक्त्याऽर्पितानि श्री मात: !

सौभाग्यानि च स्वीकुरु ॥

**धूप–**

वनस्पति रसोद्भूत: गन्धाढ्य: सुमनोहर: ।
आघ्रेय: सर्वदेवानां धूपोऽयं प्रतिगृह्यताम् ॥
ॐ श्री महालक्ष्म्यै नम: धूपम् आघ्रापयामि ।

**दीप–**

साज्यं च वर्तिसंयुक्तम् वन्हिना योजितम् मया
दीपं गृहाण देवेशि ! सर्वत्र तिमिरापहा ॥
ॐ श्री महालक्ष्म्यै नम: दीपं दर्शयामि समर्पयामि ।

**नैवेद्य–**

ॐ महालक्ष्म्यै च विद्महे सर्वशक्त्यै च
धीमहि तन्नो लक्ष्मी: प्रचोदयात्
शर्कराघृत संयुक्तं मधुरं स्वादुचोत्तमम् ।
उपहार समायुक्तं नैवेद्यम् प्रतिगृह्यताम् ॥
ॐ श्री महालक्ष्म्यै नम: नैवेद्यं निवेदयामि,
नाना ऋतुफलानि च समर्पयामि ।

**आचमन–**

ॐ प्राणाय स्वाहा,
ॐ अपानाय स्वाहा,
ॐ व्यानाय स्वाहा,
ॐ उदानाय स्वाहा,
ॐ समानाय स्वाहा ।
ॐ श्री महालक्ष्म्यै नम: आचमनीयं समर्पयामि ॥

**ताम्बूल–**

पूंगीफलं महद्दिव्यं नागवल्ली दलैर्युतम्
एलाचूर्णादि संयुक्तं ताम्बूलं प्रतिगृह्यताम् ।
ॐ श्री महालक्ष्म्यै नम: ताम्बूलं समर्पयामि ॥

**नीराजन–**

न तत्र सूर्यो भाति न तारकं नैता विद्युतो कुतो यमग्नि: ।
समेन भान्तम् अनुभाति सर्वं तस्य भासा सर्वमिदं विभाति ॥
ॐ श्री महालक्ष्म्यै नम: नीराजनं समर्पयामि ।

**जल आरती–**

ॐ द्यौ: शान्तिरन्तरिक्ष (गूं) शान्ति: पृथिवी शान्तिराप:शान्तिरोषधय: शान्तिर्वनस्पतय: शान्तिर्विश्वेदेवा: शान्ति: ब्रह्म शान्ति: सर्व (गूं) शान्तिरेव शान्ति: सा मा शान्तिरेधि ।

**प्रदक्षिणा–**

सर्वमंगललाभाय सर्वपापनिवृत्तये
प्रदक्षिणां करोम्यम्ब ! प्रसीद परमेश्वरि ॥
ॐ श्री महालक्ष्म्यै नम: प्रदक्षिणां समर्पयामि ।

**पुष्पाञ्जलि–**

पुष्पांजलिं गृहाणेमां परब्रह्मस्वरूपिणि ।
भक्त्या समर्पितं देवि ! प्रसन्ना भव सर्वदा ॥
ॐ श्री महालक्ष्म्यै नम: पुष्पांजलिं समर्पयामि ।

**क्षमा प्रार्थना–**

आवाहनं न जानामि न जानामि विसर्जनम् ।
पूजां चैव न जानामि क्षमस्व परमेश्वरि ॥
मंत्र हीनं क्रिया हीनं भक्ति हीनं सुरेश्वरि ।
यत्पूजितं मया देवि परिपूर्णं तदस्तु मे ॥
ॐ तत् सद् ब्रह्मार्पणमस्तु । अनेन कृतेन पूजाराधन कर्मणा श्री महालक्ष्मी प्रीयताम् !

दाहिने हातमा जल लिएर छोडौं, फेरि भगवती लक्ष्मीलाई सबै परिवार बसेर प्रणाम गरेर प्रसाद वितरण गरौं ।

जय गुरुदेव !

# श्री लक्ष्मी अष्टोत्तर शत नाम स्तोत्र

*माता महालक्ष्मीका १०८ नामहरू यस स्तोत्रमा समावेश गरिएका छन् । त्यसैले पूर्ण भावभक्तिका साथ यस स्तोत्रको पाठ गरिएमा माता महालक्ष्मीलाई प्रसन्न बनाउन सकिन्छ ।*

श्री शिव उवाच-
शतमष्टोत्तरं नाम्ना कमलाया वरानने ।
प्रवक्ष्याम्यति गुह्यं हि न कदापि प्रकाशयेत् ॥
महामाया महालक्ष्मीर्महावाणी महेश्वरी ।
महादेवी महारात्रिर्महिषासुर मर्दिनी ॥
कालरात्रि:कुहू: पूर्णा नन्दाऽऽद्या भद्रिका निशा ।
जया रिक्ता महाशक्तिर्देवराता कृशोदरी ॥
शचीन्द्राणी शक्रनुता शङ्करप्रियवल्लभा ।
महावराहजननी मदनोन्मथिनी मही ॥
वैकुण्ठनाथरमणी विष्णुवक्षः स्थल स्थिता ।
विश्वेश्वरी विश्वमाता वरदाऽभयदा शिवा ॥
शूलिनी चक्रिणी मा च पाशिनी शङ्खधारिणी ।
गदिनी मुण्डमाला च कमला करुणालया ॥
पद्माक्षधारिणी ह्यम्बा महाविष्णु प्रियंकरी ।
गोलोकनाथ रमणी गोलोकेश्वर पूजिता ॥
गया गंगा च यमुना गोमती गरुडासना ।
गण्डकी सरयूस्तापी रेवा चैत्र पयस्विनी ॥
नर्मदा चैव कावेरी केदार स्थलवासिनी ।
किशोरी केशवनुता महेन्द्रपरि वन्दिता ॥
ब्रह्मादि देव निर्माण कारिणी देव पूजिता ।
कोटि ब्रह्माण्डमध्यस्था कोटि ब्रह्माण्डकारिणी ॥
श्रुतिरूपा श्रुतिकरी श्रुतिस्मृति परायणा ।
इन्दिरा सिन्धुतनया, मातंगी लोक मातृका ॥
त्रिलोक जननी तंत्रा तन्त्र मन्त्र स्वरूपिणी ।
तरुणी च तमोहंत्री मंगला मंगलायना ॥
मधुकैटभ मथिनी शुम्भासुर विनाशिनी ।
निशुम्भादिहरा माता हरिशंकर पूजिता ॥
सर्वदेवमयी सर्वा शरणागत पालिनी ।
शरण्या शम्भुवनिता सिन्धुतीर निवासिनी ॥
गन्धर्वगानरसिका गीता गोविन्द वल्लभा ।
त्रैलोक्य पालिनी तङ्भ्वरूपा तारुण्य पूरिता ॥
चन्द्रा शशांक भगिनी गीतवाद्यपरायणा ॥
सृष्टिरूपा सृष्टिकरी सृष्टिसंहारकारिणी ।
इति ते कथितं देवि रमानाम शताष्टकम् ॥
त्रिसंध्य प्रयतो भूत्वा पठेदेतत्समाहितः ।
यं यं कामयते कामं तं तं प्राप्नोत्यसंशयम् ॥
इमं स्तवः यः पठतीहं मर्त्यो
वैकुण्ठ पत्न्याः परमादरेण ।
जनाधिपाद्यैः परिवन्दितः स्यात्
प्रयास्यंति श्रीपदमंतकाले ॥

# अष्ट मातृका

प्राचीनकालमा उपत्यकाका बासिन्दाहरू आफ्ना टोल इलाकाहरूमा सप्तमातृकाका मूर्तिहरू बनाएर पूजाआजा गर्दथे । यस किसिमको प्रवाह इसाको प्रारम्भिक समयदेखि छैठौं शताब्दीसम्म अत्यन्तै तीव्र गतिमा विकास भएको पाइन्छ । मध्यकालमा आइपुग्दा तान्त्रिक पद्धतिको बढ्दो लोकप्रियताका साथसाथै जनजीवनमा अष्टमातृकाको निकै नै प्रसिद्धि हुन थाल्यो ।

साधारणतया अष्टमातृकाको उल्लेख गर्दा सप्तमातृकाहरूमा महालक्ष्मीलाई थपेर अष्टमातृका बनाइएको पाइन्छ । ऐतिहासिक प्रमाण भन्द छ– मल्लकालमा गुणकामदेवले कान्तिपुर शहरलाई व्यवस्थित रूपमा बसाएर स्थापना गराएका थिए । उनले स्थापना गराएका अष्टमातृकाहरू क्रमशः ब्रह्मायणी, माहेश्वरी, कौमारी, वैष्णवी, इन्द्रायणी, चामुण्डा, वाराही र महालक्ष्मी पर्दछन् । आज पनि यी मातृकाका मन्दिरहरू देख्न सकिन्छ । पनौती र भादगाउँको ब्रह्मायणी मन्दिर, भक्तपुरको चामुण्डा र कुमारी मन्दिर, ठिमीको इन्द्रायणी मन्दिर, पाङ्गाको वैष्णवी मन्दिर आदि मध्यकालमा बनेका अष्टमातृका मन्दिरहरू हुन् ।

अष्टमातृको मूर्तिलाई यी देवीहरूले प्रयोग गरेका वाहन र आयुधहरूबाट छुट्याउने गरिन्छ ।

**वैष्णवी–** गरुड वाहनयुक्त, चार हातमा शङ्ख, चक्र, गदा, पद्म लिएकी ।

**माहेश्वर–** गोरु (साँढे) माथि चढेको र हातमा त्रिशूल लिएको स्वरूप भएकी ।

**वाराही–** भैँसी वाहनयुक्त र वराहको टाउको भएकी ।

**इन्द्रायणी–** हात्तीमाथि चढेकी र दायाँ हातमा वज्र लिएकी ।

**कौमारी–** मयुरमाथि चार हात भएकी देवी ।

**ब्रह्मायणी–** हाँसमाथि बसेकी, फूल, कलश, ग्रन्थ, डाडु चार हातमा लिएकी र कहिलेकाहीं रुद्राक्ष

**अष्टमातृकाको महत्त्वपूर्ण पक्ष महालक्ष्मीको अवधारणा हो । मध्यकालमा महालक्ष्मीलाई सप्तमातृकामा समाविष्ट गरेपछि अष्टमातृकाको अवधारणाले लोकप्रियता पायो । पहिलेदेखि नै लोकप्रिय भएका देवीदेवताको यात्रा तथा जात्रा चलाउने परम्परा कुनै न कुनै रूपमा आज पनि उपत्यकामा व्यापकरूपमा प्रचलित छ ।**

---

माला लिएकी पनि देखाइन्छन् । कहिले त यिनलाई चार टाउको भएकी पनि चित्रण गरिन्छ ।

**चामुण्डा–** शव वाहन भएको स्वरूपकी, हातमा तरवार, पाश, डोरी, चक्र लिएकी, गलामा नरमुण्ड माला लगाएकी शरीरको भाग नग्न र तल्लो भागमा हात्तीको छाला लगाएकी मुखबाट जिब्रो निकालेकी अत्यन्त डरलाग्दो स्वरूपको देखाइन्छन् ।

**महालक्ष्मी–** सिंहवाहिनी, ज्योतिवर्ण, अष्टदश भुजायुक्त महिषनाशिनी ।

मातृकाहरू नेपाल मण्डलको सुरक्षाको दृष्टिकोणले महत्त्वपूर्ण मानिन्छ । मातृकाहरूलाई कुनै दिशाको स्वामी बनाई स्थापित गरिएको पाइन्छ । चारवटीलाई पूर्व, पश्चिम, उत्तर, दक्षिण

र बाँकी चारवटीलाई वायव्य, नैऋत्य, आग्नेय र ईशान दिशाका स्वामी बनाइएको पाइन्छ । मातृकाहरूलाई आठ दिशाका दिक्पालका रूपमा पूजा गर्ने परम्परा नेपाल र भारतमा लोकप्रिय रहेको छ । यी मातृकाहरू स्थापना गर्दा समय परिस्थितिअनुसार स्थापना गरिएको पाइन्छ । धार्मिक सहिष्णुता नेपाली धार्मिक परम्पराको एउटा महत्त्वपूर्ण पक्ष हो । विभिन्न स्थानमा निर्मित अष्टमातृका मन्दिरअन्तर्गत भैरव, गणेशलगायत वागिनी, सिंहिनी र अन्य देवीदेवतासँगै पूजा गर्ने प्रचलन उपत्यकामा पाइन्छ ।

यसैगरी नेपालमा प्रचलित विश्वासअनुसार सबै मातृकाहरू कुनै न कुनै ग्रहसँग सम्बन्धित हुने गर्दछ भन्ने विश्वास पाइन्छ । इन्द्रायणी शुक्रसँग र वैष्णवी सूर्यसँग सम्बन्धित देवी हुन् । पाटनमा नवदुर्गा पूजालाई विशेष प्राथमिकताका साथ पूजा, उपासना गरिन्छ । अष्टमातृकामा त्रिपुरासुन्दरीलाई थपेर नवदुर्गा बनाइएको पाइन्छ । त्यस्तै, भक्तपुरमा नवग्रह शान्तिका लागि अष्टमातृका र त्रिपुर ासुन्दरीलाई स्थापित गरेको पाइन्छ । कान्तिपुर र ललितपुरका मूल बस्ती बाहिर घरहरूमा पनि अष्टमातृकाका आकृतिहरू ढुङ्गे पीठहरूमा देखाइएको पाइन्छन् । तत्कालीन समयमा निरन्तर आक्रमण तथा प्रत्याक्रमण भइरहने हुँदा सुराक्षाको दृष्टिबाट सिटी सेन्टरका वरिपरि यसरी अष्टमातृकाहरूलाई स्थापित गरिएको हो । त्यस्तैगरी, अष्टमसान (प्रत्येक मसानमा एक-एक मसान भैरव रहने मान्यता) तथा वस्तीभित्रका निश्चित संवेदनशील

स्थानहरूमा अष्टगणेश, दस महाविद्या, त्रिकुण्डगणेश आदि तान्त्रिक देवीदेवताका साथै आकाश भैरव र विश्वनाथ भैरव स्थापित छन् ।

अष्टमातृकाको महत्त्वपूर्ण पक्ष महालक्ष्मीको अवधारणा हो । मध्यकालमा महालक्ष्मीलाई सप्तमातृकामा समाविष्ट गरेपछि अष्टमातृकाको अवधारणाले लोकप्रियता पायो । पहिलेदेखि नै

लोकप्रिय भएका देवीदेवताको यात्रा तथा जात्रा चलाउने परम्परा कुनै न कुनै रूपमा आज पनि उपत्यकामा व्यापकरूपमा प्रचलित छ। महालक्ष्मीका केही महत्त्वपूर्ण मन्दिरहरू जस्तै महालक्ष्मी मन्दिर बोडे, महालक्ष्मी मन्दिर खोकना, महालक्ष्मी मन्दिर लगनखेल, महालक्ष्मी मन्दिर थानकोट, ललितपुरको ठेछैं महालक्ष्मी आदि हुन्। मल्ल राजाहरूले महालक्ष्मीबाट अत्यन्तै प्रभावित भई विभिन्न समयमा जात्रा समेत चलाउने गरेको पाइन्छ र भक्तपुरका राजा

आनन्ददेवले श्री महालक्ष्मीको सुनको मूर्ति बनाई प्रतिष्ठा गरी १ गते वैशाख प्रतिवर्ष जात्रा चलाउने रीति बसालेका थिए। पाटनका राजा हरिसिद्धि मल्लले लुभुको महालक्ष्मीको स्थापना गरी जात्रा चलाउने रीति चलाएका थिए । राजा रत्न मल्लका छोरा अमर मल्ल भने महालक्ष्मीका भक्त भएको हुनाले उनले खोकनामा पनि प्रत्येक वर्ष महालक्ष्मीको जात्रा चलाउने चलन चलाएका थिए। जय गुरुदेव !

## अष्टमातृका गणनृत्य

अष्टमातृका गणनृत्यको सम्बन्धमा एउटा प्रसङ्ग आउँछ। नेपाल सम्वत् ७८६ मा राजा श्रीनिवास मल्लले सपनामा आफ्नै चोकमा अष्टमातृका गण आदि देवीदेवताहरू झकिझकाउ भएर नाचिरहेको देखेछन्। निद्राबाट बिउँझेर चोकमा हेर्दा कोही देखनन्। सपना राम्रो हो, होइन भन्ने जान्न उनले आफ्ना राजगुरु र बुद्धिजीवीहरू सबैलाई बोलाएर छलफल गरे। अष्टमातृकालगायत अन्य देवीदेवताहरू पनि झकिझकाउ भएर नाचेको सपना अति राम्रो भएको राजगुरुलगायतले राजालाई सुनाए। विपनामा पनि उक्त नाच हेर्न पाए अति राम्रो हुने कुरा सुझ्याउँदा राजाले आवश्यक व्यवस्था गर्न लगाएर अष्टमातृकाको नृत्य प्रारम्भ गर्न लगाए। त्यसबेला तान्त्रिकहरूले नृत्य गर्न सिकाएका थिए। अष्टमातृका नृत्यबाट देश पिचास, पुतनाको भयबाट रक्षा हुने, अग्नि आदिको भयबाट मुक्त हुने, राजभय, मौसमको भय, जलभय, वायुभय, शत्रु भय, चट्याङ्गभय, भुकम्पभयजस्ता अष्टाङ्ग भयबाट मुक्त हुने विश्वास गरिन्छ। यस नृत्य ठिमीमा पनि गाईजात्राको भोलिपल्टदेखि शुरु गरेर चार दिनसम्म मनाइन्छ।

# शिष्य धर्म

–जसले प्रेमको उच्च पराकाष्ठालाई दर्शाउँछ, त्यो गुरु शिष्यको सम्बन्ध हो । शिष्य कुनै पनि स्वार्थ लिएर गुरु कहाँ जाँदैन । गुरुप्रति उसको भावनामा कतै कुनै स्वार्थको तत्त्व हुँदैन । यदि हुन्छ भने राधाको र मीराको कृष्णप्रति भएको जस्तो निश्चल प्रेम तत्त्व, समर्पण तत्त्व हुन्छ ।

–शिष्यले सबै कुरा गुरुबाट प्राप्त गर्दछ– भौतिक स्तरमा पनि र आध्यात्मिक स्तरमा पनि । तर उसको मनमा कुनै प्रकारको आकांक्षा हुँदैन– न त भौतिक सफलताको, न त सिद्धि साधनाको नै ।

–यस्तो त्यसकारण हुन्छ कि शिष्य ध्येयरहित हुन्छ, उसलाई थाहा छ कि गुरु त आमा समान हुनुहुन्छ, स्वयं नै उसका सबै आवश्यकता पूरा गरिदिनुहुन्छ अथवा उसको जीवनलाई यथोचित मार्गदर्शन गरिदिनुहुन्छ । फेरि व्यर्थमा कामना गर्नुको के औचित्य ?

–एउटी आमा अबोध बालकको हातमा चक्कु दिनुहुन्न किनकि उनलाई थाहा छ कि बालकले स्वयंको हानि गर्न सक्छ । यसरी नै सद्गुरुदेवले पनि सिद्धिरुपी दूधालु तलवार शिष्यको हातमा तबसम्म दिनुहुन्न जबसम्म शिष्यमा चाहिने जति संयम, सामर्थ्य आइसकेको हुँदैन । शिष्यले अब शक्तिलाई सम्हाल्न सक्छ भन्ने गुरुलाई विश्वास जागिसकेपछि सिद्धि शक्ति त तुरुन्त पाइनैहाल्छ । एक सच्चा शिष्यले यस कुरालाई राम्ररी बुझ्दछ कि उसले परिणामको वास्ता नगरी साधनाहरु गर्दै रहन्छ किनकि उसलाई यो थाहा छ कि जब उसमा पात्रता आउँछ, सद्गुरुदेवले तत्क्षण नै सबै सिद्धिहरु उसलाई दिनुहुन्छ ।

–प्रत्येक कार्य गर्ने बेलामा, साधना सम्पन्न गर्ने बेलामा, प्रत्येक मन्त्र जप वा यज्ञ गर्ने बेलामा शिष्यले अनुभव गर्दछ कि सद्गुरुदेव उसको नजिकै कतै हुनुहुन्छ तथा सूक्ष्मरुपले उसको मार्गदर्शन गरिरहनुभएको छ, उसका त्रुटिहरुलाई सुधारिरहनुभएको छ । निरन्तर यस्तो भावना नै वास्तविक गुरु पूजा हो, गुरु वन्दना हो, गुरु आराधना हो । जो शिष्य यस भावनाका साथ अग्रसर हुन्छ, विफलताले उसलाई छुन पनि सक्दैन ।

–गुरुको तस्वीर टाँग्नु, भजन गाउनु, गुरुको नारा लगाउनु, पूर्ण समर्पण होइन, यी त गुरुप्रति शिष्यको भावनाका चिह्न मात्रै हुन् । वास्तविक गुरु पूजन त गुरुद्वारा बताइएको ज्ञानलाई जीवित जाग्रत राख्नु, गुरुद्वारा बताइएको मार्गमा हिँड्नु तथा अरुलाई पनि त्यस मार्गमा हिँड्नका लागि प्रेरित गर्नु हो ।

## उत्तम भगवद्भक्त

ये हिताः सर्वजन्तूनां गतासूया अमत्सराः ।
वशिनो निस्पृहाः शान्तास्ते वै भागवतोत्तमाः ।।
कर्मणा मनसा वाचा परपीडां न कुर्वते ।
अपरिग्रहशीलाश्च ते वै भागवताः स्मृताः ।।
सत्कथाश्रवणे येषां वर्तते सात्त्विकी मतिः ।
तद्भतनक्तविष्णुभक्ताश्च ते वै भागवतोत्तमाः ।।
मातापित्रोश्च शुश्रूषां कुर्वन्ति ये नरोत्तमाः ।
गधविश्वेश्वरधिया ते वै भागवतोत्तमाः ।।
व्रतिनां च यतीनां च परिचिर्यापराश्च ये ।
वियुक्तपरनिन्दाश्च ते वै भागवतोत्तमाः ।।
सर्वेषां हितवाक्यानि ये वदन्ति नरोत्तमाः ।
ये गुणग्राहिणो लोके ते वै भागवताः स्मृताः ।।
आत्मवत् सर्वभूतानि ये पश्यन्ति नरोत्तमाः ।
तुल्याः शत्रुषु मित्रेषु ते वै भागवतोत्तमाः ।।
अन्येषामुदयं दृष्ट्वा येऽभिनन्दन्ति मानवाः ।
हरिनामपरा ये च ते वै भागवतोत्तमाः ।।
शिवे च परमेशे च विष्णौ च परमात्मनि ।
समबुद्ध्या प्रवर्तन्ते ते वै भागवताः स्मृताः ।।

(नारदपुराण १।५)

जो सबै जीवका हितैषी छन्, जसले अरुको दोष देख्दैन, जसले कसैको डाह गर्दैन, मन–इन्द्रियलाई वशमा राख्दछ, निःस्पृह र शान्त छ, ऊ उत्तम भगवद्भक्त हो। जसले कर्म, मन र वचनले अरुलाई पीडा पुऱ्याउँदैन, जसको संग्रह गर्ने स्वभाव छैन, ऊ भगवद्भक्त हो। जसको सात्त्विकी बुद्धि उत्तम भगवत्कथा सुन्नमा लागिरहन्छ तथा जो भगवान् र उहाँका भक्तहरुको पनि भक्त छ, ऊ श्रेष्ठ भगवद्भक्त हो । जो श्रेष्ठ मनुष्य माता–पिताप्रति गङ्गा र विश्वनाथको भाव राखेर उहाँहरुको सेवा गर्दछ, ऊ श्रेष्ठ भगवद्भक्त हो। जो व्रतधारी र यतिहरुको सेवामा लागिरहन्छ र अरुको निन्दा कहिल्यै गर्दैन, ऊ श्रेष्ठ भगवद्भक्त हो। जो श्रेष्ठ पुरुष सबैका लागि हितले भरिएको वचन बोल्दछ र केवल गुणको नै ग्रहण गर्दछ, ऊ यस लोकमा भगवद्भक्त हो। जो श्रेष्ठ पुरुष समस्त जीवहरुलाई आफूसमान देख्दछ तथा शत्रु–मित्रमा पनि समान भाव राख्दछ, ऊ श्रेष्ठ भगवदेभक्त हो। जो मनुष्य अरुको अभ्युदय देखे प्रसन्न हुन्छ तथा सदा हरिपरायण रहन्छ, ऊ श्रेष्ठ भगवद्भक्त हो र जो परमेश्वर शिव एवं परमात्मा विष्णुप्रति समबुद्धिको व्यवहार गर्दछ, ऊ श्रेष्ठ भगवद्भक्त हो।

मन्त्र तन्त्र यन्त्र विज्ञानसम्बन्धी
नेपालकै पहिलो रेडियो कार्यक्रम

# गोरक्ष निखिल सन्देश

gnsandesh@ssk.org.np

| स्थान | समय (बिहान) | स्टेशन | मेगाहर्ज |
|---|---|---|---|
| पोखरा | सोमबार ५:०५–५:४५ | माछापुच्छ्रे FM | ९१ |
| चितवन | सोमबार ५:००–५:४० | कालिका FM | ९५.२ |
| धनगढी | सोमबार ५:३०–६:०० | दिनेश FM | ९३.८ |
| सुर्खेत | शनिबार ५:१५–५:४५ | रेडियो भेरी FM | ९८.६ |
| गोरखा | सोमबार ५:००–५:३० | रेडियो गोरखा FM | ९२.८ |
| भैरहवा | बिहीबार ५:००–५:४५ | रूपन्देही FM | १०२ |
| दाङ घोराही | बिहीबार ५:३०–६:०० | रेडियो मध्यपश्चिम FM | ९१.४ |
| पाल्पा | बिहीबार ५:००–५:३० | रेडियो मुक्तिनाथ FM | ९०.८ |
| सिन्धुली | बिहीबार ५:००–५:३० | सिन्धुलीगढी FM | १०३.६ |
| दाङ लमही | शुक्रबार ५:३०–६:०० | रेडियो देउखुरी FM | १०५.८ |
| पोखरा | बिहीबार ५:३०–६:०० | रेडियो सराङ्कोट FM | १०४.६ |
| दमौली | बिहीबार ५:२५–५:५५ | दमौली FM | ९४.२ |
| कोहलपुर | बिहीबार ५:३०–६:०० | कोहलपुर FM | १००.२ |
| चितवन | सोमबार ५:००–५:४० | त्रिवेणी FM | १००.६ |
| दमौली | बुधबार ५:०५–५:३५ | मादीसेती FM | १०५.८ |
| दमौली | बुधबार ५:१०–५:३० | रेडियो तनहूँ FM | ९७.२ |

## २०६७ कार्तिक महिनामा पर्ने चाडपर्वहरु

| | |
|---|---|
| कार्तिक १ गते | **श्री शिव गोरक्ष हवन**<br>पापांकुशा एकादशी |
| कार्तिक २ गते | **तान्त्रोक्त वटुक भैरव हवन**<br>**तान्त्रोक्त गणपति हवन** |
| कार्तिक ३ गते | **तान्त्रोक्त महालक्ष्मी हवन,**<br>**तान्त्रोक्त विन्ध्यवासिनी हवन** |
| कार्तिक ४ गते | **दिव्य गुरु महोत्सव,**<br>**तान्त्रोक्त बगलामुखी हवन,**<br>**तान्त्रोक्त महर्षि वेदव्यास हवन** |
| कार्तिक ५ गते | कोजाग्रत पूर्णिमा |
| कार्तिक ६ गते | कार्तिकस्नान/आकाशदीपदानारम्भ |
| कार्तिक १३ गते | अष्टमीव्रत, गोरखकाली पूजा |
| कार्तिक १८ गते | काग तिहार, धन्वन्तरी जयन्ती |
| कार्तिक १९ गते | कुकुर पूजा, लक्ष्मी पूजा, दीपावली |
| कार्तिक २० गते | गाईगोरु पूजा |
| कार्तिक २१ गते | गोबर्धनपूजा, भाइटीका |
| कार्तिक २६ गते | छठपर्व |
| कार्तिक २८ गते | अष्टमीव्रत, गोरखकाली पूजा |

**प्रत्येक बृहस्पतिबार बिहान १०:00 बजे-गुरू पूजन**
**प्रत्येक दिन साँझ ५:00 बजे-आरती**

## हार्दिक श्रद्धाञ्जलि

**जन्म वि.सं.** **२०१९/०९/०४**

**स्वर्गारोहण** **२०६७/०५/३०**

**स्वर्गीय पवित्रा श्रेष्ठ**

**यस आश्रमकी सक्रिय कार्यकर्ता साधिका पवित्रा श्रेष्ठको असामयिक निधन भएकोमा शोक सन्तप्त परिवारजन प्रति समवेदना प्रकट गर्दै उहाँको चीर शान्तिका लागि परमपूज्य सद्गुरुदेवहरुसँग प्रार्थना गर्दछौं ।**

**– सिद्धाश्रम शक्ति केन्द्र**
बसुन्धरा, काठमाडौं

## हार्दिक श्रद्धाञ्जलि

**२०१९/०२/०२** **२०६७/०६/०६**

**स्वर्गीय तेजप्रसाद दाहाल**

**सिद्धाश्रम शक्ति केन्द्र पोखराका सक्रिय कार्यकर्ता साधक तेजप्रसाद दाहालको कार दुर्घटनामा परी असामयिक निधन भएको दुःखद घडीमा शोक सन्तप्त परिवारप्रति समवेदना प्रकट गर्दै मृतात्माहरुको चिरशान्तिका लागि परमपूज्य सद्गुरुदेवहरुसँग हार्दिक प्रार्थना गर्दछौं ।**

**– सिद्धाश्रम शक्ति केन्द्र**
बसुन्धरा, काठमाडौं

# नाथ सम्प्रदायका चौरासीनाथ

नाथ सम्प्रदायलाई जीवन्तता दिने दिव्यतम् नाथ योगीहरूको शृङ्खलामा नवनाथ योगीहरूले दिनुभएको अतुलनीय योगदान आफैमा अवर्णनीय छ । यस अवर्णनीय योगदानमा अन्य नाथ योगीहरूले पनि ठूलो भूमिका खेल्नुभएको छ । नाथ योगीहरूलाई सिद्ध योगी पनि भनिन्छ । यसैले पनि नाथ सम्प्रदाय सिद्धहरूको सम्प्रदाय हो, सिद्धहरूको समूह हो । नाथ सम्प्रदायलाई अध्ययन गर्दा नाथ योगीहरूलाई सिद्धहरूको दुई खण्डमा बाँडिएको पाइन्छ– पहिले नवनाथहरूको समूह र दोस्रो चौरासी सिद्धहरूको समूह भन्ने बुझिन्छ । नवनाथभित्र पर्नुहुने महायोगीहरू एवं नवनाथसम्बन्धी चर्चापछि सिद्धहरूको बारेमा चर्चा गर्न गइरहेका छौं ।

सिद्धहरूको समूहलाई चौरासी जनाको संख्यामा बाँडेको पाइन्छ । चौरासीको संख्यालाई एक विशिष्ट संख्या मानिन्छ । साथै चौरासी नै सिद्ध किन हुनुपर्‍यो, सिद्धहरूलाई किन चौरासी जनामा मात्र सीमित राखियो भन्ने कुरामा धेरै विद्वान्हरूले आ-आफ्नै धारणाहरू राखेको पाइन्छ । चौरासी लाख योनिलाई प्रतिनिधित्व गर्न चौरासी सिद्धहरूको निर्माण भएको भन्ने कुरा कतै पाइन्छ भने कतै योग मार्गका योगीहरू नै सिद्धयोगीको रूपमा विकसित हुनु भएकोले पनि योगका प्रमुख चौरासी आसनसँग चौरासी सिद्धहरूलाई दाजिएको पाइन्छ । चौरासी सिद्धहरू वास्तवमा विभिन्न सिद्धि, शक्तिहरूले भरिपूर्ण व्यक्तित्व भएका कुरामा भने सबै विद्वान्हरू एक मत भएको पाइन्छ । चौरासीवटा शक्तिहरूको पुञ्ज, चौरासी किसिमका रङहरूको समूह, चौरासीजना व्यक्तित्वहरूको समूहलाई नै सामान्यतया चौरासी सिद्ध भनिन्छ । यिनै चौरासी सिद्धहरूलाई चौरासीनाथको रूपमा पनि परिभाषित गरिएको पाइन्छ । नवनाथमा कुन कुन योगीहरू पर्नुहुन्छ भन्ने कुरामा विद्वान्हरूमा मतभेद पाइए जस्तै चौरासीनाथहरूमा कुन कुन नाथ योगी सिद्ध पुरुषहरू पर्नुहुन्छ भन्ने कुरामा पनि मतभेद पाइन्छ । विभिन्न ठाउँ र त्यहाँको भौगोलिक परिस्थितिअनुसार नाथ योगीको नाम राखिने परम्पराले पनि कैयौँ नामहरू जुधेको पाइन्छ । योगीहरू एउटै स्थानमा सधैंभरि नबस्ने एवं घुम्ने क्रममा, आफ्नो परिचय दिने क्रममा, कार्यहरूको परिचय दिने क्रममा स्थानीय सामाजिक परिवेश एवं भाषाको कारण नाम रहन जाने हुँदा पनि एउटै नाम धेरै ठाउँमा भएको पाइन्छ ।

चौरासी सिद्धहरूका विभिन्न सूचीहरू

पाइन्छन् । विभिन्न विद्वानहरूले बनाएका सूचीहरू यहाँ पनि उल्लेख गर्नु प्रासङ्गिक नै होला भन्ने ठानी यहाँ उल्लेख गर्ने कोशिश गरेका छौँ । ज्योतिरिश्वरको रचना 'वर्णरत्नाकर'मा नाथ सिद्धहरूको संख्या ८४ भन्ने उल्लेख गरे पनि केवल ७६ सिद्धहरूको नाम मात्र उल्लेख भएको पाइन्छ । ती नामहरू यसप्रकार छन्-

१. सीलनाथ (मीननाथ)
२. गोरक्षनाथ
३. चौरङ्गीनाथ
४. चमारीनाथ
५. ततिया
६. हलिया
७. केदारिया
८. ढोगंपा
९. दारिया
१०. विरुण
११. कपाली
१२. कभारी
१३. कान्त
१४. कनखल
१५. मेषल
१६. उन्मन
१७. कान्तली
१८. धोवी
१९. जालन्धर
२०. ढोगी (टोंगी)
२१. मवह
२२. नागार्जुन
२३. दौली
२४. भिवाणी (भिषाल)
२५. अचिति
२६. चंपक
२७. मेदिनि (ढेण्टस)
२८. भुम्बरी
२९. बाकलि
३०. तुजी (कूजी)
३१. चर्पटी
३२. भाडे
३३. चाँदन
३४. कामरी
३५. करवत
३६. धर्मपा पतंग
३७. भद्र
३८. पातलि भद्र
३९. पालिटिह
४०. भाँड (भानु)
४१. मीनो
४२. निर्दय
४३. सबर
४४. साति
४५. भर्तुहरि
४६. भीषण
४७. भटी
४८. गगणमा
४९. गभार
५०. मनुरा
५१. कुमारी
५२. जीवन
५३. अधोसाधव
५४. गिरिवर
५५. सियारी
५६. नागवालि
५७. विभवत्
५८. सारंग
५९. विवि कधिज
६०. मगर धज
६१. अचिति
६२. विचिति
६३. नेचक
६४. चाटल
६५. नाचन
६६. पाहिल
६७. भीलो
६८. पाहिल
६९. मासल
७०. चिविल (कमल)
७१. गोविन्द
७२. भीम
७३. भैरव
७४. भद्र
७५. भभरी
७६. गुरुकुटी

*यस स्तम्भअन्तर्गत हस्तरेखा विज्ञानअनुसार हस्तरेखासम्बन्धी जानकारीहरु पाठकवर्गसमक्ष राख्दै आइरहेका छौँ । आशा छ, यसबाट यहाँहरु लाभान्वित हुनुहुनेछ ।*

# आफ्नो हात आफै हेरौं

## सूर्य रेखा (अघिल्लो अंकबाट क्रमशः)

सूर्यसँग सम्बन्धित केही नयाँ तथ्यहरु यहाँ उल्लेख गरिन्छ :

१. लामो, स्पष्ट र सीधा सूर्य रेखा व्यक्तिलाई यश, मान, प्रतिष्ठा दिलाउन सहायक हुन्छ,

२. यदि दुवै हातमा यो रेखा स्पष्ट छ भने व्यक्ति जीवनमा सफल हुन्छ,

३. यदि यो रेखा कहींबाट पनि काटिएको छैन र पूरा लम्बाई सहित छ भने व्यक्तिको जीवनमा कुनै प्रकारको पनि कमी रहँदैन,

४. सानो सूर्य रेखा व्यक्तिको जीवनमा परिश्रम एवं संघर्षपछि मात्रै सफलता दिनमा सहायक हुन्छ,

५. सूर्य रेखा जुन ठाउँमा काटिन्छ, आयुको त्यस भागमा व्यक्तिले आफ्नो व्यापार तथा कार्य बदल्छ,

६. यदि हत्केला गहिरो छ र सूर्य रेखा स्पष्ट छ भने त्यस व्यक्तिको प्रतिभाको सही रुपमा उपयोग हुन पाउँदैन,

७. यदि यो पातलो वा फिका छ भने यस्तो व्यक्तिले आफ्नो कलाको पूर्णरुपमा उपयोग गर्न पाउँदैन,

८. यदि सूर्य रेखाको मार्गमा द्वीपको चिह्न छ भने त्यो व्यक्ति जीवनमा कंगाल हुन्छ तथा उसलाई समाजमा अपयश प्राप्त हुन्छ,

९. यदि हत्केलामा वृहस्पति पर्वत उठेको छ र सूर्य रेखा गहिरो छ भने त्यस व्यक्तिको सम्बन्ध अत्यन्त उच्च स्तरका व्यक्तिहरुसँग हुन्छ,

१०. यदि सूर्य रेखामा ताराको चिह्न छ भने उसले आफ्नो कलाको माध्यमबाट विश्वव्यापी सफलता प्राप्त गर्दछ,

११. यदि हत्केलामा जुन स्थानमा सूर्य रेखा सबैभन्दा अधिक गहिरो छ भने आयुको त्यस भागमा व्यक्तिले विशेष धन लाभ प्राप्त गर्दछ,

१२. यदि सूर्य रेखाको समाप्तितिर बिन्दुको चिह्न छ भने उसलाई जीवनमा अधिक कष्ट उठाउनु पर्ने हुन्छ, तर अन्तमा सफलता प्राप्त हुन्छ,

१३. यदि हत्केलामा सूर्य रेखा पातलो भए पनि सीधा र स्पष्ट छ भने त्यो व्यक्ति समृद्धिशाली

हुन्छ,

१४. यदि सूर्य रेखाको अन्तमा नक्षत्रको चिह्न छ भने उसलाई राष्ट्रव्यापी सम्मान प्राप्त हुन्छ,

१५. यदि सूर्य रेखाको प्रारम्भ र अन्तमा नक्षत्रको चिह्न छ भने उसको जीवनमा कुनै प्रकारको पनि कमी हुँदैन,

१६. यदि सूर्य रेखाको समाप्ति कैयौँ स-साना रेखाहरुबाट भएको छ भने उसलाई जीवनमा असफलता नै मिल्दछ,

१७. यदि सूर्य रेखाको समाप्ति कुनै तेर्सो रेखाबाट भएको छ भने उसले जीवनमा राम्रोसँग प्रगति गर्न सक्दैन,

१८. यदि सूर्य रेखाको समाप्तिमा क्रसको चिह्न देखिन्छ भने त्यस व्यक्तिको अन्त अत्यन्तै दु:खदायी हुन्छ,

१९. यदि सूर्य रेखा कैयौँ ठाउँमा टुटेका छन् भने उसमा प्रतिभा त हुन्छन् तर त्यसको माध्यमबाट न त उसले श्रेष्ठ धनलाभ नै गर्न सक्छ, न त उसलाई उच्चकोटिको सम्मान नै मिल्छ,

२०.यदि सूर्य रेखा हत्केलामा छैन भने त्यस व्यक्तिको जीवन बेकारजस्तै हुन्छ,

२१. सूर्य रेखामा वर्गको चिह्न छ भने उसले जीवनमा कैयौँ पटक अपमान सहनु पर्ने हुन्छ,

२२. यदि दुवै हत्केलामा यो रेखा जीवन रेखाबाट प्रारम्भ हुन्छ भने उसले कलाको माध्यमबाट सफलता प्राप्त गर्छ,

२३. यदि सूर्य रेखाको अन्त दुई धाराहरुबाट हुन्छ भने वा अन्तमा यी रेखाहरु दुई भागमा बाँडिन्छन् भने समाजमा उसलाई सम्मान प्राप्त हुँदैन,

२४. सूर्य रेखाका साथमा कैयौँ अरु सहायक रेखाहरु देखिन्छन् भने उसको जीवनमा आश्चर्यजनक रुपमा प्रगति हुन्छ,

२५. यदि विवाह रेखाद्वारा सूर्य रेखालाई काटेको छ भने उसको गृहस्थ जीवन पूर्णत: दु:खमय हुन्छ,

२६. यदि सूर्य रेखाबाट कुनै एउटा रेखा मस्तिष्क रेखातिर जान्छ भने उसको गृहस्थ जीवनमा पूर्ण धनलाभ रहन्छ,

२७. यदि यस रेखामा चतुर्भुजको चिह्न देखिन्छ भने उसलाई प्रारम्भमा धेरै असफलता प्राप्त भए पनि अन्तमा भने पूर्ण सफलता प्राप्त हुन्छ,

२८. यदि यस रेखालाई तीन चार रेखाहरुले काटेको देखिन्छ भने त्यस्तो व्यक्ति जीवनमा कुनै पनि कार्यमा सफल हुँदैन,

२९. यदि शनि पर्वतबाट कुनै रेखा निस्केर सूर्य रेखालाई काट्दछ भने आर्थिक कमीको कारणले उसले जीवनमा सफलता पाउँदैन,

३०. यदि यो रेखा स्पष्ट छ तर साथमा केही लहरादार रेखाहरु देखिन्छन् भने त्यस व्यक्तिको प्रतिभाको कुनै उपयोग हुँदैन,

३१. यदि सूर्य रेखा गहिरो छ र यसको दुवैतिर सहायक रेखाहरु देखिन्छन् भने त्यस व्यक्तिलाई उच्चस्तरीय सम्मान प्राप्त हुन्छ,

३२. यदि सूर्य रेखाबाट कुनै शाखा निस्केर शनि पर्वततिर जान्छ भने त्यस पर्वतको विशेष गुण व्यक्तिलाई प्राप्त हुन्छ,

# २०६७ कार्तिक महिनाका शुभ समयहरू

**कार्तिक ७, १४, २१ र २८ गते गते (आइतवार)**
**श्रेष्ठ– दिन ७:३६–१०:००, १२:२४–२:४८**
**रात्रि ७:३६–९:१२, ११:३६–२:००**

**कार्तिक १, ८, १५, २२ र २९ गते गते (सोमवार)**
**सर्वश्रेष्ठ– दिन ९:१२–१०:४८, ३:३६–६:००**
**श्रेष्ठ– दिन ६:००–९:१२, १:१२–३:३६**
**रात्रि ८:२४–११:३६, २:००–३:३६**

**कार्तिक २, ९, १६, २३ र ३० गते (मंगलवार)**
**सर्वश्रेष्ठ– दिन १२:२४–२:४८**
**श्रेष्ठ– दिन ६:००–७:३६,१०:००–१०:४८**
**रात्रि ८:२४–११:३६,२:००–३:३६**

**कार्तिक ३, १०, १७ र २४ गते (बुधवार)**
**सर्वश्रेष्ठ– दिन ६:४८–८:२४**
**श्रेष्ठ– दिन ८:२४–११:३६**
**रात्रि ६:४८–१०:४८, २:००–४:२४**

**कार्तिक ४, ११, १८ र २५ गते (बिहीवार)**
**सर्वश्रेष्ठ– दिन ५:१२–६:००**
**श्रेष्ठ– दिन ६:००–६:४८,१०:४८–१२:२४,३:१२–५:१२**
**रात्रि १०:००–१२:२४**

**कार्तिक ५, १२, १९ र २६ गते (शुक्रवार)**
**सर्वश्रेष्ठ– दिन ४:२४–६:००**
**रात्रि १:१२–२:००**
**श्रेष्ठ– दिन ९:१२–१०:२४,२:००–४:२४**
**रात्रि ८:२४–१०:४८**

**कार्तिक ६, १३, २० र २७ गते (शनिवार)**
**सर्वश्रेष्ठ– दिन ५:१२–६:००**
**श्रेष्ठ– दिन १०:४८–२:००**
**रात्रि ८:२४–१०:४८,१२:२४–२:४८,४:२४–६:००**

**नोट**:
**दिन-भन्नाले बिहान ६:०० देखि साँझ ६:०० सम्म**
**रात्रि-भन्नाले साँझ ६:०० देखि अर्को बिहान ६:०० सम्म**

***परमपूज्य सद्‌गुरुदेव डा. नारायणदत्त श्रीमालीज्यूद्वारा रचित 'ज्योतिष और काल निर्णय' ग्रन्थमा आधारित ।***

३३. सूर्य रेखाबाट कुनै शाखा निस्केर गुरु पर्वतमा पुग्छ भने त्यस व्यक्तिको जीवनमा श्रेष्ठ राज्यपद प्राप्त हुन्छ,

३४. यस रेखाको वरिपरि धेरै स-साना रेखाहरु देखिन्छन् भने उसको जीवनमा आर्थिक बाधा रहन्छ,

३५. यदि हृदय रेखाबाट निस्केर कुनै शाखा त्रिशूलजस्तै बनेर सूर्य रेखालाई स्पर्श गर्दछ भने यस्तो व्यक्तिले जीवनमा स्वयंको प्रयत्नबाटै सफलता प्राप्त गर्दछ,

३६. यदि साहिँली औँला टेढोमेढो भए पनि सूर्य रेखा स्पष्ट छ भने उसलाई अपराधपूर्ण कार्यबाट यश प्राप्त हुन्छ,

३७. यदि सूर्य रेखाको अन्तमा तीन रेखाहरु देखिन्छन् भने उसको जीवनमा आर्थिक दृष्टिबाट कुनै कमी रहँदैन,

३८. यदि यो रेखा बारम्बार टुटेर बढिरहेको देखिन्छ भने उसले आफ्नो आलस्यको कारणले गर्दा सफलता प्राप्त गर्दैन,

३९. यदि यो रेखा जंजीरजस्तो छ भने उसको जीवनमा प्रशस्त बाधाहरु रहन्छन्,

४०. यदि यो रेखा टेढमेढो छ भने त्यस व्यक्तिको कार्यले नै उसको जीवनमा बाधाहरु उत्पन्न गर्छन्,

४१. यदि हत्केलामा भाग्य रेखा तथा सूर्य रेखा दुवै श्रेष्ठ छन् भने उसको जीवन सबै दृष्टिले सम्पन्न हुन्छ,

४२. यदि रेखाको अन्तमा द्वीप छ भने व्यक्ति जीवनभरि विरामी बनिरहन्छ ।

वास्तवमा सूर्य रेखा व्यक्तिको जीवनलाई र उसको भाग्यलाई बुझ्न अति नै उपयोगी मानिन्छ । त्यसैले हस्तरेखा विशेषज्ञले सूर्य रेखालाई अत्यन्तै सूक्ष्मरुपमा र अति नै गहिराईसँग अध्ययन गर्नुपर्दछ ।

# केही आसन र तिनको प्रभाव

## मयुरासन

मयुर चराको नाम हो । यस आसनमा दुवै हातको प्रयोगले पुरै शरीरलाई उठाएर सन्तुलन गराइन्छ । अलि गाह्रो भए पनि निरन्तर अभ्यासले प्रशिक्षित भइन्छ । यस अभ्यासमा दुवै हातलाई मिलाएर भुइँमा टेक्नुपर्छ । हातलाई भुइँमा टेकाउँदा औंलाहरू पछाडि फर्किएका हुन्छन् र दुवै कुहिनालाई नाइटोका दुवै किनारामा स्थिर राख्नुपर्छ। अगाडितिर काँध र शरीरलाई पनि भुइँदेखि मास्तिर उठाउनुपर्दछ। यो स्थिति मयुरको जस्तो हुने भएकोले मयुरासन भनिएको हो ।

**प्रभाव :**

नाइटो सर्कनु, पेट बढ्नु, कब्जियत आदिमा अति नै फाइदाजन छ। मधुमेह रोगमा यो अत्यन्तै लाभदायक आसन मानिन्छ ।

## कटि आसन

उत्तानो परेर भुइँमा सुतौं । दुवै खुट्टालाई मास्तिर उठाऔं र पेटतिर लैजाने अभ्यास गरौं । तर घुँडालाई भने मोडिन दिनु हुँदैन । अब दायाँ हातको बूढी औंलाले दायाँ खुट्टाको बूढी औंला र बायाँ औंलालाई बेस्सरी समात्नु पर्दछ । यसपछि दुवै खुट्टालाई सिधा गरेर भित्रतिर तानौं । यस्तो अवस्थामा कम्मर शिर भुइँमा स्थिर हुनुपर्दछ । हात र खुट्टालाई तन्काउँदै श्वासलाई तानेर राख्ने र श्वासलाई खुकुलो पार्ने ।

**प्रभाव :**

यस आसनको अभ्यासलाई निरन्तर गर्दा पेट र कम्मरका सबै रोग छुट्छन्, फोक्सा र काँध बलियो हुन्छ, पेट दुखेको बेलामा यो आसन रामवाण हो, हृदयको शक्तिमा वृद्धि हुन्छ, शरीर सुडौल र आकर्षक देखिन्छ, कम्मर र Pelvic क्षेत्रमा शुद्ध रगतको संचारमा वृद्धि हुन्छ, मानसिक तनाव कम भएर जान्छ ।

## धनुरासन

धनुषको जस्तो आकृति यस आसनमा बन्ने हुनाले यसलाई धनुरासन भनिएको हो । पहिले घोप्टो परेर लमतन्न सुत्नु पर्दछ। श्वासलाई बाहिर फाल्दै घुँडालाई मोड्नुपर्दछ । भुजालाई पछाडि फर्काउँदै दुवै हातले गोलीगाँठामा समात्ने । २-३ पटक सामान्य श्वास फेर्नुपर्दछ ।

अब श्वास बाहिर फाल्दै घुँडालाई भुइँदेखि माथि उठाउँदै र खुट्टालाई तन्काउँदै छातीलाई पनि अगाडि मास्तिर उठाउनुपर्दछ । यसो गर्दा शरीर धनुषको आकार बन्छ ।

शरीरलाई उठाउँदै जति सकिन्छ त्यति पछाडि तान्नुपर्दछ। करङ र Pelvic bone ले भुइँ छोएको हुनु हुँदैन। पेटले मात्र शरीरको भारलाई उठाएको हुनुपर्दछ । खुट्टालाई उठाउँदा घुँडा जोडिएको हुनु हुँदैन । अब जति सकिन्छ, खुट्टालाई त्यति नै माथि लैजाने । पुरै तन्किएपछि घुँडा, फिला र गोलीगाँठालाई आपसमा जोड्नुपर्छ। पेट पूर्णरूपले तन्किँदा श्वास चाँडो भएता पनि नआत्तिकन जति बेरसम्म यो आसन गर्न सकिन्छ, गर्दै रहनुपर्छ । २० सेकेन्डदेखि १ मिनेटसम्म सामान्य श्वासमा यो स्थितिमा अडिरहने ।

अन्त्यमा श्वास फाल्दै गोलीगाँठामा हातलाई छुटाउने र खुट्टालाई सिधा तन्काउँदै शिर र खुट्टालाई भुइँमा राखेर सवासनमा विश्राम गर्नुपर्छ। सकेसम्म २-३ पटक दोहोऱ्याउँदा राम्रो हुन्छ ।

**प्रभाव :**

पूर्णरूपले रीढ पछाडि तन्कने भएकोले यसमा लचकता आउँछ । यसबाट उमेर ढल्किँदा पनि यौवनको अनुभव भइरहन्छ, यस आसनमा घाँटी पुरै तन्कने हुँदा Thyroid को समस्या पनि कम भएर जान्छ, पेट र काँधका सामस्या हरू हराएर जान्छन् ।

# भुइँकटहर

हामीले स्तरीय भनेका खाद्यसामग्रीहरू त्यति पौष्टिक नहुन सक्छन् । हामीले उपयुक्त ठानेका खाद्यवस्तुहरू पौष्टिकता र गुणको दृष्टिले भन्नुपर्दा फलफूल सरह पौष्टिक, गुनिला र रोगनिवारक नहुन सक्छन् । फेरि सहजै र सस्तो मूल्यमा पाइने फलफूलहरू स्वास्थ्य र शरीर बनाउन अत्यन्तै उपयोगी हुन पनि सक्दछन् । तिनमध्ये सहजै पाइने फलफूलहरूमा उखु, नासपाती, जामुन, मेवा, आरु, आरुबखडा छन् । यस्तै उपयोगी फलमध्येको भुइँकटहर पनि एउटा हो । यसलाई हिन्दीमा 'अनन्नास', अंग्रेजीमा Pine Apple र ल्याटिनमा Ananas Comosus भनिन्छ । भुइँकटहरमा पेटमा रहेका जुका, चुर्ना नाश गर्ने गुण पाइन्छ । हामीले प्रोटिनयुक्त पदार्थ ज्यादा मात्रामा खाएका छौं भने यसले त्यो पनि पचाइदिन्छ । घाँटी सुन्निएको छ, टन्सिल बढेको छ भने पनि भुइँकटहरको सेवन गर्नु लाभदायक हुन्छ । यसले कब्जियत, अजीर्ण, उच्च रक्तचाप, दम, खोकी, मासिक धर्मको अनियमितता आदिलाई हटाउँछ ।

यसका अन्य फाइदाहरू :

अजीर्ण (भोक नलाग्ने) भएमा : खाना खानुभन्दा आधा घण्टाअगाडि एक गिलास भुइँकटहरको रस नियमित पिउने गरे भोक जाग्दछ । भुइँकटहरमा नून र मरिचको धूलो छर्केर खाने गरे अजीर्णमा फाइदा पुग्दछ ।

टन्सिल/घाँटी सुन्निएमा वा डिप्थेरिया रोगमा : भुइँकटहरले डिप्थेरिया रोगीको घाँटीमा जमेको जालोलाई काटिदिन्छ, टन्सिल र घाँटी सुन्निएको पनि ठीक पार्दछ । त्यसैले यी समस्या भएमा भुइँकटहरको फल स-साना टुक्रा पारी सेवन गर्नुपर्दछ ।

पूरा शरीर सुन्निएमा : पिसाब कम हुने, शरीर सुन्निने, पिसाबमा धेरै एल्ब्यूमिन जाने समस्या भएमा वा आँखावरिपरि सुन्निएमा पाकेको भुइँकटहर बिहान/बेलुका सेवन गर्ने र नून खान बन्द गरिदिएमा करिब तीन हप्तामा शरीर सुन्निएको पनि बस्दछ र अन्य समस्या पनि हट्दछ ।

छालामा फोका, दाग आदि आएमा : भुइँकटहरको फललाई सानो-सानो टुक्रा पारी नून र मरिच छर्केर नियमित खाने गर्नाले छालामा आएका फोका, दागहरू हराउँदै जान्छन् ।

शरीरमा धेरै गर्मी बढेमा : भुइँकटहरको सर्वत बनाएर पिउन दिनाले शरीरको अतिरिक्त गर्मी शान्त हुन्छ, पेटको गर्मी पनि मेटिन्छ । शरीरमा शीतलता र ताजापन छाउँछ ।

भुइँकटहर र स्याउको रस बराबर मात्रामा मिलाएर एक चम्चा मह र आधा चम्चा अदुवाको रस मिसाएर पिउने गरेमा सम्पूर्ण शरीरमा रोग प्रतिरोधक क्षमता बढ्दछ, आन्द्राहरूमा जमेको म्युकस बाहिर निस्किन्छ । यसको नित्य सेवन गर्नाले डर लागिरहने समस्या हट्दछ, प्यास शान्त हुन्छ, शरीर पुष्ट र तागतवान् बन्दछ । मस्तिष्क र मुटुलाई यसले बलियो पार्दछ । पिसाब कम आउने समस्या भएका रोगीलाई पिसाब राम्ररी खुलेर आउने बनाइदिन्छ । पत्थरी रोगमा यसको सेवन गर्नाले अत्यधिक लाभ प्राप्त हुन्छ ।

सस्तो र सर्वसुलभ किसिमले पाइने भुइँकटहर फलको महत्त्वलाई जानेर बुझेर यसको उपयोग गर्न सकेको खण्डमा अनेकौं रोगमाथि विजय प्राप्त गरी पूर्ण स्वस्थ र सबल शरीर निर्माण गर्न सकिन्छ ।

जय गुरुदेव !

गोरक्ष निखिल ज्योति दिव्य विद्याश्रमले गत असोज ४ गते एक भव्य कार्यक्रमका बीच अभिभावक दिवस (Parents' Day) मनायो। काठमाडौँको जमलस्थित राष्ट्रिय नाचघरमा सम्पन्न उक्त कार्यक्रम दिउँसो १:३० बजे पानसमा दीयो बालेर शुभारम्भ गरिएको थियो। कार्यक्रम सद्गुरुदेवहरुको स्तुतिवन्दना, प्रार्थनाबाट अघि बढेको थियो। नृत्य, गायन, भजनहरुको रमाइलो प्रस्तुतीसँगै कार्यक्रमले बीट नमारुञ्जेल विद्याश्रमका विद्यार्थीहरुको विभिन्न आकर्षक अन्य प्रस्तुतिले अभिभावकहरु निकै नै रोमाञ्चित हुनु भएको थियो।

कार्यक्रमको सञ्चालन विद्याश्रमका विद्यार्थीहरुबाटै भएको उक्त कार्यक्रममा अंग्रेजी तथा नेपाली नाटक समेत प्रस्तुत गरिएको थियो। फुटबल डान्स, फेशन शो, र्याम्पआदि प्रस्तुतिहरुले कार्यक्रमलाई थप आकर्षण दिएको थियो।

कार्यक्रमको अर्को विशेष आकर्षणको रुपमा 'गोरक्ष युग ल्याउँछुम म, निखिल युग ल्याउँछु म' बोलमा प्रस्तुत नृत्य तथा लिलिपुट नृत्य रहेको थियो।

कार्यक्रममा प्रसिद्ध संगीतकार सुरेश अधिकारीले आफ्नो गायनले उपस्थितहरुलाई मुग्ध पार्नुभएको थियो। साथै उहाँले भविष्यमा विद्याश्रमबाट निस्कने एल्बमका लागि आफूले संगीत भरिदिने कुरासमेत व्यक्त गर्नुभएको थियो।

अभिभावकहरुको बाक्लो उपस्थिति रहेको उक्त कार्यक्रममा अभिभावकहरुको तर्फबाट श्री ढुण्डिराज न्यौपानेले आफ्नो मन्तव्य प्रस्तुत गर्नुभएको थियो भने सिद्धाश्रम शक्ति केन्द्र नेपालको तर्फबाट सावर पन्थी साधक रामजी अर्यालले शुभकामना मन्तव्य व्यक्त गर्नुभएको थियो।

आश्रम गतिविधि

## दिव्य गुरू महोत्सव

परमपूज्य सद्‌गुरूदेव डा. नारायणदत्त श्रीमालीज्यू (परमहंस स्वामी श्री निखिलेश्वरानन्द महाराजज्यू) को अवतरण भएको शुभ २१ तारीखको पावन अवसरमा सिद्धाश्रम शक्ति केन्द्रले प्रत्येक महिना दिव्य गुरू महोत्सवलाई भव्य एवं दिव्यरूपमा मनाउँदै आइरहेको छ। यस क्रममा गत आश्विन ५ गते तदनुसार २१ सेप्टेम्बर, २०१० का दिन बसुन्धरा आश्रम परिसरमा उक्त कार्यक्रम सम्पन्न भयो।

बिहान १०:१५ मा शुभारम्भ भएको कार्यक्रममा निखिल स्तवन, गोरक्ष स्तवनको सामुहिकरूपमा सस्वर पाठ, गुरु पादुका पूजन, गुरूमन्त्र जप, हवन, आवाहन भजन, आरतीको क्रम रहेका थिए।

कार्यक्रममा सम्पन्न दिव्य गुरु पूजनको सौभाग्य सावरपन्थी साधक रामजी अर्यालले प्राप्त गर्नुभएको थियो। आरतीपछि स्वागत मन्तव्य, भजन कीर्तन, नृत्य, प्रवचन आदिका क्रमहरू रहेका थिए। प्रवचनको क्रममा सावरपन्थी साधक रामजी अर्यालले आध्यात्मिक र भौतिक सफलताका लागि विजयादशमीको उपलक्ष्यमा शुभकामना दिनुभयो। सत्यम् शिवम् सुन्दरम्‌लाई आत्मसात् गर्न सक्यौँ भने गुरू प्राप्ति हुने बताउनुहुँदै संस्थाको लक्ष्य पनि यही रहेको उहाँले बताउनु भएको थियो।

सहभागीहरूलाई मन्तव्यको माध्यमबाट साधक गुरू सेवा दलका साधक गोकुल लिम्बुले स्वागत गर्नुभएको उक्त कार्यक्रममा विद्याश्रम, सम्पर्क कार्यालयहरू तीनकुने र बानेश्वरबाट भजन प्रस्तुत भएको थियो। विद्याश्रमका विद्यार्थीहरूले कार्यक्रममा नृत्य पनि प्रस्तुत गरेका थिए। कार्यक्रममा गोरक्ष निखिल वाणी पत्रिकाको २० जना सदस्य बनाउनु भएका साधक साधिकाहरूलाई सावरपन्थी साधक रामजी अर्याल र गोरख गुफाका पुजारी प्रदीपनाथ योगीज्यूले उपहार प्रदान गर्नुभएको थियो।



## हवन कार्यक्रम

सिद्धाश्रम शक्ति केन्द्रबाट हरेक महिना सञ्चालन हुँदै आइरहेका मासिक कार्यक्रमअन्तर्गत हवन कार्यक्रमहरु गत महिना निम्नानुसार सम्पन्न भए–

### केन्द्रीयरुपमा सम्पन्न हवन कार्यक्रमहरु

आश्विन ४ गते सोमबार– श्री शिव गोरक्ष हवन, गोरखनाथ मन्दिर, पशुपति, मृगस्थली, बिहान ८:००–९:०० बजे। आश्विन ५ गते मंगलबार– तान्त्रोक्त वटुक भैरव हवन, वटुक भैरव मन्दिर, लगनखेल, बिहान ७:००–८:०० बजे। आश्विन ६ गते बुधबार– तान्त्रोक्त महालक्ष्मी हवन, महालक्ष्मी मन्दिर, लगनखेल, बिहान ८:००–९:०० बजे। आश्विन ७ गते बिहीबार– तान्त्रोक्त वगलामुखी हवन, वगलामुखी मन्दिर, पाटन, बिहान ८:००–९:०० बजे।

### सम्पर्क कार्यालयहरुमा सम्पन्न मासिक हवन कार्यक्रमहरु

आश्विन ६ गते बुधबार– तान्त्रोक्त विन्ध्यवासिनी हवन, विन्ध्यवासिनी मन्दिर, पोखरा, कास्की, बिहान ८:००–९:०० बजे। आश्विन ७ गते बिहीबार– तान्त्रोक्त वेदव्यास हवन, वेदव्यास गुफा, तनहुँ, बिहान ८:००–९:०० बजे। आश्विन ५ गते मंगलबार– तान्त्रोक्त गणपति हवन, सूर्यविनायक, भक्तपुर, बिहान ७:००–८:०० बजे। आश्विन ५ गते मंगलबार– तान्त्रोक्त चण्डेश्वरी हवन, चण्डेश्वरी मन्दिर, काभ्रे, बिहान ७:००–८:०० बजे।

## नवदुर्गा भवानीलगायतको पूर्ण कदको मूर्ति प्रतिस्थापन

सिद्धाश्रम शक्ति केन्द्रले परमपूज्य सद्‌गुरुदेहरुको कृपा, आशीर्वादस्वरुप आध्यात्मिक गतिविधिलाई अगाडि बढाउँदै जनजनमा आध्यात्मिक लहर ल्याउने महाअभियानलाई निरन्तरता दिइरहेको छ। यसै क्रममा शुभ विजयादशमीको पावन अवसरमा आश्रम परिसरमा परमपूज्य सद्‌गुरुदेवहरुको दिव्य तस्वीरलगायत माता दुर्गा भवानी, श्री सिद्धि विनायक, माता लक्ष्मी, माता सरस्वती र कुमार कार्तिकेयको पूर्ण कदको मूर्तिलाई सजाएर कोजाग्रत पूर्णिमासम्मका लागि दर्शनार्थ स्थापना गरियो । अति आकर्षक भगवती दुर्गालगायतको मूर्तिको दर्शनार्थ सजाएर राखिएको स्थानमा भक्तहरु दर्शन गरेर कृतार्थ भएको अनुभूतिलाई सजिलै बिर्सन सकिन्न । विशेष सजावटका साथ राखिएको मातालगायत अन्य देवीदेवताहरुको मूर्ति साक्षात्‌जस्ता देखिन्थे ।

महान चाड विजयादशमीलाई विशेष कार्यक्रममा साथ मनाउने क्रममा नवरात्रिको पहिलो दिन अर्थात् घटस्थापनाको दिनमा आश्रममा जमरा राखिएको थियो भने सोही दिनदेखि बिहान ७ बजेदेखि अर्थसहित नियमित चण्डी पाठ, पूजन र नवार्ण मन्त्र जप गरिएको थियो ।

नवरात्रिको विशेष कार्यक्रममा साँझ ५:०० बजेपछिको आरतीपछि भजनकीर्तनको कार्यक्रम पनि सम्पन्न गरिएको थियो ।

साँझ ४:०० बजेको हवन कार्यक्रममा चामुण्डा माताको मन्त्र (नवार्ण मन्त्र) वाचन गरेर हवन गरिएको थियो ।

त्यस्तै, सम्पर्क कार्यालयहरुमा दुर्गा भवानीको तस्वीर स्थापना गरिएको थियो भने नवार्ण मन्त्र जपको कार्यक्रम पनि सम्पन्न गरिएको थियो ।

यस मन्त्र जपलाई साधक साधिकाहरुले जहाँ सुविधा हुन्छ त्यहीं बसेर बढीभन्दा जप गर्नुभएको थियो। नवार्ण मन्त्र जप कार्यक्रम संस्थाका अन्य सम्पर्क कार्यालयहरुमा पनि धेरैभन्दा धेरै सङ्ख्यामा जप गरेर सम्पन्न गरिएको थियो ।

त्यस्तै, विगत २ महिना अघिदेखि सञ्चालन भइरहेको साँझको गुरु आरतीपछिको हवन कार्यक्रम आश्विन महिनामा पनि थप कार्यक्रमसहित सञ्चालन भयो । बेलुकी ५:०० बजेपछि नित्य गुरु आरतीपछि सम्पन्न हुँदै आइरहेको यस हवन कार्यक्रम समय परिवर्तनसँगै बेलुकी ४:०० बजेदेखि हाल सञ्चालन भइरहेको छ ।

### जानकारी !

सिद्धाश्रम शक्ति केन्द्र नेपालका विभिन्न ठाउँमा रहेका सम्पर्क कार्यालयहरुलगायत आरती संचालन केन्द्रहरुमा भएका आध्यात्मिक कार्यक्रमका गतिविधिहरुलाई यस पत्रिकामा प्रकाशनार्थ जतिसक्दो चाँडै पठाएर सहयोग गरिदिनुहुन सम्बन्धित सबैलाई जानकारी गराइन्छ ।

**सम्पर्क**

गोरक्ष निखिल वाणी

पो.ब.नं. १०५११, काठमाडौं, फोन/फ्याक्स: ०१-४३८९१५४

इमेल: info@gnv.org.np

हामीले भर्खरै विजयादशमीलाई विदा गर्‍यौं। लगत्तै शुभ दीपावलीलाई हाम्रो घर आँगनमा स्वागत गर्न पाइरहेका छौं। यो हाम्रो परम सौभाग्य हो।

परम सौभाग्य यसकारण हो कि प्रत्येक चाडपर्वले हामीलाई ती कुराहरु दिएर जान्छन् जुन हामीले कुनै पनि मूल्यमा किन्न सक्दैनौं। चाडपर्वका सांस्कृतिक, धार्मिक, ऐतिहासिक, सामाजिक महत्त्व त छँदैछन्, यसले दिने आध्यात्मिक खुराकलाई आत्मसात् गर्नु नै वास्तवमा चाडपर्व मनाउनु हो। दीपावलीले पनि हाम्रा लागि अमूल्य आध्यात्मिक खुराक लिएर हाम्रो घर आँगनमा पाइला टेकेको छ। यसपालि हामी यस आध्यात्मिक खुराकबाट बञ्चित हुन नपरोस्, यसपालि हामी यस खुराकलाई सेवन गरेर त्यस अमृततर्फ अगाडि बढ्न सकौं जसलाई आत्मोन्नति भनिन्छ, जसलाई मुक्ति भनिन्छ, जसलाई ईश्वर दर्शन भनिन्छ, जसलाई आत्म साक्षात्कार भनिन्छ, जसलाई ब्रह्मानन्दको प्राप्ति भनिन्छ।

विगतका दीपावलीहरुमा हामी केवल बाहिरी आडम्बरमा मात्रै रमायौं, बहिर्मुखी भएर केवल सांसारीक वस्तुको उपयोग र उपभोगमा मात्रै हरायौं। विगतका गल्ती यसपटक कदापि दोहोरिनु भएन, विगतमा जस्तै यसपालि पनि हामी केवल जुवा-तास, मनोरञ्जन र खानपिनमा मात्रै हराउनु भएन। यसपालिको दीपावलीलाई मंगलमय बनाउनु छ, यसपालिको दीपावलीलाई आनन्दप्रद बनाउनु छ, यसपालिको दीपावलीमा सम्पूर्ण क्षुद्रता, सम्पूर्ण अमंगल, सम्पूर्ण कमी, कमजोरी हटाउनु छ किनकि मनका विकार नहटेसम्म, भावनात्मक रुपमा हामी परिशुद्ध नभएसम्म, वैचारिकरुपमा स्थिरता नआएसम्म परिवर्तन सम्भव छैन। शुद्धिकरणबाट जब परिवर्तन हुन्छ तब आध्यात्मिक धरातललाई उँभो उठाउनका लागि यो नै सबैभन्दा ठूलो कुरा बन्छ।

यही धरातलले हामीलाई उठाउनेछ, हामी उठेमा हाम्रो परिवार, टोलछिमेक र समाज उठ्नेछ, यसले देशलाई उठाउनेछ। देशले विश्वलाई उठ्न प्रेरित गर्नेछ। यसरी नयाँ युगको शंखघोष हुने हो। त्यसैले पहिले आफूमा परिवर्तन आउनु पर्छ। आफूमा आएको आमूल परिवर्तन नै कुनै पनि व्यक्तिका लागि मूल सम्पत्ति हो, लक्ष्मी हो। यस्तै व्यक्तित्व नै कुनै पनि संस्थाको लागि अमूल्य हुन्छ। संस्थामा यस्तै व्यक्तित्वको बाहुल्यता आवश्यक हुन्छ। व्यक्तिगत स्वार्थ, तिकडमबाजी, चलखेल, षडयन्त्र, टिकाटिप्पणी, एकले अर्कोको तेजोबध गर्नु त जताजतै भइरहेकै छन्। यी विकृति, विसंगतिलाई पनि आश्रममा हुल्न खोजेर विश्वलाई आध्यात्मिक शीतलता दिन्छु भन्नु दिवास्वप्न मात्रै हो। एकातिर गोरक्ष निखिल युग ल्याउँछु भन्ने अर्कोतिर क्षुद्रताको हद नाघ्नु मानवता होइन, यसले गोरक्ष निखिल युगका संवाहकहरुबीच फाटो ल्याउँछ, यो सबैका लागि प्रत्युत्पादक छ। यस कुरालाई सबैले हृदयंगम गर्नु जरुरी भइसकेको छ।

शुभ दीपावलीको पावन अवसरमा सबैमा सद्बुद्धि पलाओस्, गोरक्ष निखिल युगका लागि कस्सिएका हातहरु अझै दह्रो बनोस्, एकापसमा भाइचाराको अभ्युदय होओस्, सबैबाट गोरक्ष निखिल युगका लागि आवश्यक पृष्ठभूमि तयार हुन सकोस्, यही मंगल कामना गर्दछौं, यही शुभेच्छा प्रकट गर्दछौं।

अस्तु !

१-८: आश्विन महिनामा सम्पन्न दिव्य गुरु महोत्सव।

९-१०: नवरात्रिभर बसुन्धरा आश्रममा स्थापित मूर्तिहरु ।

गो. हु. का. द. नं. ९/०६०/६१
का. जि. द. नं. ७०/०५६

।। ॐ नमो गुरु मछिन्द्र, शब्द साँचा
पिण्ड काचा मेटा भक्ति, गुरुका शक्ति
नवनाथै जगाऊँ, चौराषीनाथै जगाऊँ
फूटो मंत्र ईश्वरो गुरु गोरख वाचा ।।

**दुर्लभ ग्रन्थहरूको अध्ययन गरौं ।**
**मानव जीवनलाई धन्य बनाऔं ।।**